# धार्मिक कथाहरू












लेखन/संकलन
अमोघसिद्धि

# धार्मिक कथाहरु

लेखन/संकलन
अमोघसिद्धि

प्रकाशक/वितरक
**एस.पी. प्रकाशन प्रा.लि.**
बागबजार, काठमाडौं
फोन: ०१-४२४५१९७

# विषय-सूची


| शीर्षक | पेज नं. |
| --- | --- |
| ❑ सत्यवान र सावित्रीको कथा | ५ |
| ❑ अर्जुनले आत्मदाह गर्न जोगिए | ११ |
| ❑ गुरु भनेको गुरु नै हो | १६ |
| ❑ कर्णको दानको कथा | २१ |
| ❑ किचक मारिएका कथा | २५ |
| ❑ बुद्धिबिनाको धन छैन | २९ |
| ❑ बाउछोराको युद्ध | ३४ |
| ❑ आफ्नो सेवा गरौं | ३८ |
| ❑ वेश्या स्वर्ग गइ, पण्डित नरक गयो | ४१ |
| ❑ भाग्य फूटेको व्यक्तिको बुद्धि हुँदैन | ४६ |
| ❑ गणेशको पूजा किन पहिले ? | ४९ |
| ❑ समुन्द्र मन्थन र लसुनको कथा | ५३ |
| ❑ आइमाइ शास्त्र | ५७ |
| ❑ मान्छे मरेपछि कहाँ जान्छन्? | ७४ |
| ❑ ऋषि सन्तोषानन्द र बिपना | ८५ |
| ❑ वैशालु झारपात | ८८ |
| ❑ कुमारी मेरियम र जिसस | ९५ |
| ❑ जिसस क्राइष्टको अर्थ | १०३ |
| ❑ शिव भगवान्लाई मासु चढाउने भक्त | १०६ |
| ❑ अत्रि ऋषिको कथा | १११ |

| | | |
|---|---|---|
| ❑ | गुरुभक्त उद्दालक | ११५ |
| ❑ | काशी कसरी वाराणसी भयो? | ११८ |
| ❑ | राजा वलीको कथा | १२२ |
| ❑ | भिष्म पितामहको अन्तिम उपदेश | १२६ |
| ❑ | अर्जुनलाई शिवको वरदान प्राप्त भयो | १२९ |
| ❑ | गोकुलवासीको बसाइँ–सराई | १३२ |
| ❑ | रक्तबीजको वध | १३५ |
| ❑ | अन्नदान महादान | १३८ |
| ❑ | कलियुग कहिलेदेखि सुरु भयो? | १४० |
| ❑ | लाउरे र ढल देवता | १४२ |
| ❑ | केही धार्मिक सूत्र कथाहरू | १५०–१५५ |
| ❑ | केही धार्मिक शब्दावली र तिनका अर्थहरू | १५६–१६० |

# सत्यवान र सावित्रीको कथा

पौराणिक कालमा अनेकौं महिलाहरू चर्चामा आएका छन् । तिनीहरूमध्ये सावित्रीको पहिचान र परिचय बेग्लै छ । उनी पतिव्रताको रूपमा चर्चित भइन् । हुन त सीता, द्रौपदी, मन्दोदरी सबै पतिभक्त थिए, तर सावित्रीले पतिभक्तको जुन नमुना प्रस्तुत गरिन्, त्यो अनुपम छ र अद्‌भुत पनि छ ।

राजा अश्वाजितकी एक्ली छोरीको रूपमा सावित्रीको जन्म भएको थियो । उनी अत्यन्तै सुन्दरी थिइन् । उनलाई देखेर नलोभिने कोही थिएन । उनी यति आकर्षक थिइन् कि उनलाई देखेर सम्मोहित नहुने व्यक्ति कोही थिएन । उनको विवाह इनुयत्सेन पुत्र सत्यवानसँग भएको थियो । विवाहपछि उनी सत्यवानसँग जंगलमा बस्न थालिन् ।

एकदिन देवर्षी नारद घुम्दै सत्यवानको आश्रममा आइपुगेका थिए । सावित्रीले देवर्षीको उचित सत्कार गरिन् । यस किसिमको सम्मान र सत्कार पाएर खुशी भएका देवर्षीले सावित्रीको जीवनको एउटा रहस्य खोलिदिए । उनले भनिदिए कि सत्यवानको आयु अब एकवर्ष मात्रै छ । यो कुरा सूनेर सावित्रीलाई अत्यन्तै पिडा भयो । उनी अब एक वर्षपछि विधवा भएर बस्नुपर्ने कुरा सम्झेर अत्यन्तै दुःखी भइन्, तर उनी आत्तिने खालकी थिइनन् । उनलाई आफ्नो पतिको मृत्युलाई टार्न सक्छु भन्ने विश्वास थियो ।

एक वर्षपछि एकदिन सत्यवान जंगलमा दाउरा खोज्न गएका थिए । सावित्री पतिसँगै थिइन् । सत्यवान एउटा रूखमा चढे र बञ्चरोले दाउरा काट्‌दै थिए । अचानक उनलाई रिंगटा लागेर आयो । उनी भुइँमा ओर्लिए । सावित्रीले आफ्नो काखमा पतिको शिर राखेर टाउकोमा मालिस गरिदिइन् । पंखाले

हम्कीदिइन् र पतिलाई धैर्य गर्न र ईश्वर सम्झेर उनकै नाम लिन आग्रह गरिन् ।



त्यसैबेला यमराज उपस्थित भए । उनले सत्यवानको आत्मा लिएर हिड्नै लागेका थिए । सावित्रीले उनलाई रोक्तै भनिन्– "पर्खनुहोस् । तपाईं को हो? किन मेरो पतिको आत्मा लिएर जाँदै हुनुहुन्छ?"

यमराजले भने- "हे सावित्री ! म यमराज हुँ । तिम्रो पति सत्यवानको आयु अहिले समाप्त भइसकेको छ, त्यसैले म उनको आत्मा लिन आएको हुँ । अब यिनको आत्मा लिएर जान लागेको ।"

सावित्रीले भनिन्- "हे यमराज ! तपाईं मलाई लिएर जानुहोस् ! म मेरो पतिको छायाँ हुँ । म र मेरो पतिको बीचमा विवाह भएको दिनमा हामीले अब एउटै आत्मा भएको प्रण गरेका थियौं । शास्त्रमा पनि पत्नीलाई पतिकै अंश मानेको छ । त्यसैले जहाँ पति हुनुहुन्छ पत्नी पनि उहीं हुनुपर्छ । त्यसैले तपाईंले मलाई पनि लिएर जानुहोला ।"

यमराजले भने- "हे सावित्री ! तिमी अहिले जान पाउँदिनौ । मैले पनि तिमीलाई लिएर जान मिल्दैन तिम्रो आयु अझै बाँकी छ ।"

सावित्रीले भनिन्- "हे यमराज ! तपाईं मलाई लिएर जानुहुन्न भने म आफै आउनेछु । म मेरा पति बिना अलग बस्न एकछिन पनि सक्तिन । म उहाँको छाँया हुँ । हरेक नारी आफ्ना पतिको छाया हुन् । उनीहरू पतिबिना अलग रहनै सक्तैनन् । जसरी घाम र छाँया सधैं साथ हुन्छन् । जसरी कुनै व्यक्तिको वा वस्तुको छाँयालाई वस्तुबाट काटेर अलग गर्न सकिदैन उसरी नै तपाईंले मलाई सत्यवानबाट अलग गर्न सक्नुहुन्न ।"

सावित्रीले यसरी यमराजलाई अप्ठेरोमा पारेपछि यमराज दिक्क भए । सावित्रीको कुरा जायज पनि थियो । उनको कुरा यमराजले काट्न सकेनन् । तर जति नै तर्कयुक्त र जायज कुरा भए पनि त्यो कुरा नियमअनुसार थिएन । उनले अहिले सावित्रीलाई लिएर जान पाउदैनथे । त्यसैले उनले सावित्रीलाई फकाएर मनाउने विचार गरे ।

सावित्रीलाई सम्झाउने उद्देश्यले यमराजले भने- "हे सावित्री ! पतिसँगै सति जान्छु भनेर जिद्दी नगर । मैले पनि नियमअनुसार काम गर्नुपर्छ । नियम भन्दा माथि म छैन । म धर्म र नियमको अधीनमा छु । त्यसैले तिमीलाई लैजाने अनुमति अहिले मलाई छैन । बरू तिमी कुनै एउटा वर माग । म तिमीलाई वरदान दिन्छु । वरदान पाएर यहिं बस ।"

यमराजले सोचेका थिए कि सावित्रीले वरदान मागिन् भने अर्को जन्ममा पतिलाई भेट्न पाउँ भन्ने वरदान माग्लिन् या पतिको स्वर्गमा वास होस आत्माले शान्टि पाओस् या यस्तै यस्तै कुनै वर माग्लिन र यस्तै वरले उनलाई भुलाएर आफू सत्यवानको आत्मा लिएर जाने सोचाइ थियो ।

यमराजले सोचे जस्तो भएन । सावित्री ज्यादै बाठी र बुद्धिमान निस्किइन् । उनले वरदान माग्दै भनिन्- "हे यमराज ! यदि तपाईं मलाई वरदान दिनुहुन्छ भने यस्तो वरदान दिनुहोस् कि मेरो ससुराको गुमेको राज्य फिर्ता पाएर उनले आफ्नो नाति-नातिनासिँग खेलन पाउन ।"

सावित्रीले यो अचम्मको वरदान मागेको देखेर यमराज चकित परे । तर अघि नै यमराज वचनमा फसिसकेकाले- "तथास्तु" भनेर त्यहाँबाट् हिडन खोजे ।

हिँड्नै लागेका यमराजलाई रोक्तै सावित्रीले भनिन्- "हे यमराज ! तपाईंले मलाई त वरदान दिनुभयो तर अब तपाईं नै भन्नुहोस् मेरा ससुराका नाति हुने हो भने त्यो नाति कसरी जन्मन्छ जबकि तपाईं मेरो पतिलाई लिएर जाँदै हुनुहुन्छ?"

सावित्रीले फेरि भनिन्- "अब पति बिना मैले कसरी बच्चालाई जन्म दिन सक्छु र मेरा ससुराले नाति खेलाउन पाउलान्?"

यमराज फसँग भए । उनले त विचार नै नगरी वरदान दिनाले आफैं फस्न पुगे । उनले सावित्रीको यस्तो बुद्धिमता र चलाखी देखेर दंग परे । उनलाई खुशी पनि लाग्यो । सत्यवानको आत्मालाई उनकै शरीरमा फिर्ता गरेर उनी त्यहाँबाट अलप भए ।

यस कथाले यस्तो शिक्षा दिएको छ कि यदि पत्नी पतिव्रत धर्मको पालन गर्छिन् भने उनको पतिको मृत्युलाई समेत टार्न सक्छिन् । पतिव्रत धर्ममा त्यति ठूलो शक्ति छ ।

आजभोलि यस्ता पत्नीहरू पाउन मुश्किल छ । पतिप्रति निष्ठावान पत्नी पाउन आजभोलि असंभव नै छ ।

पत्नी दुष्ट, चरित्रहीन भइन भने त्यसले पंतिको आयु घट्छ । यस्ता अलछिना पत्नीहरू पतिका लागि बोझ हुन । पतिका शत्रु हुन् ।

पत्नी असल, सत्चरित्रवान र पतिप्रति निष्ठावान भएमा पतिको आयु बढ्छ र घरको शोभा बढ्छ । यस कथाले दिन खोजेको मुल सन्देश यहि हो ।

आजभोलि श्रीमान खाडीका मुलुकमा गएर दुःख गरेर कठोर श्रम गरेर घरमा पैसा पठाउँछन् । घरमा श्रीमती परपुरूषसँग लागेर आफ्नो श्रीमानले पठाएको पैसा मोजमस्तिमा उडाएका थुप्रै उदाहरणहरू देखिने र सुनिने भएकोले कुनै समय सावित्री जस्ती पतिभक्त स्त्री पनि थिइन् भनेर पत्याउन गाह्रो हुन्छ । तर यो सत्य घटना नै हो ।

सति सावित्रीको यस कथाबाट यो सन्देश पनि दिन खोजिएको छ कि पत्नी भनेका पतिका छाया हुन् । नारीहरू पुरूषका छाया हुन् ।

आजभोलि नारीले पुरूषसँग प्रतिस्पर्धा गर्न खोजेको देखिन्छ पुरूषले लगाएको जस्तो कपडा लगाउन थालेका छन् । नारीहरू पुरूषले झैं छोटो कपाल बनाउँछन् । पाइन्ट लगाउँछन् । उनीहरू पुरूषले झैं उठेर पिसाव गर्न थालेका छन् । पुरूषले चुरोट पिएको देखेर नारीहरू पनि पुरूषलाई च्यालेन्ज गर्दै चुरोट पिउन थालेका छन् । यो गलत प्रवृत्ति हो ।

पुरूषलाई महिलाहरूले चुनौति दिन थाले देखि नै पृथ्वीमा अशान्ति बढेको छ । विकृति बढेको छ ।

सत्यवान जंति भाग्यमानी पुरूष अरू कोही भएन । सति सावित्री जस्ती पत्नी पाउनु भनेको उनको महाभाग्य हो । आजभोलि पुरूषले सति सावित्रीको ठिक उल्टो स्वभावको पत्नी पाउँछ । यस्ता पत्नीले लोग्नेको मृत्यु छेक्ने त कुरै छाडिदिउँ पतिको आफ्नो आयु पनि पूरा बाँच्न दिँदैनन् ।

दुष्ट र खराब चरित्र भएका महिलाका पतिले अकालमै मुर्नपर्छ । असल चरित्र भएका महिलाका पतिको नजिक आउन पनि यमराज डराउछ ।



# अर्जुनले आत्मदाह गर्नु जोगिए

महाभारतको लडाइँमा श्रीकृष्णले धेरै छलकपट गरेका थिए । महाभारत राजनीति, कुटनीति, धोका, छलकपट सिकाउने धार्मिक ग्रन्थ हो । रामायणले मर्यादा, आदर्श र नैतिकताको मात्रै उपदेश दिन्छ । माहाभारतले पनि निष्कर्षमा त धर्म र आदर्शको शिक्षा नै दिएको छ, तर छलकपट र झुट पनि सिकाएको छ ।

माहाभारतको लडाइँमा कौरवहरूले खडा गरेको चक्रव्युह तोड्न गएका अभिमन्युलाई कौरवहरूले मारिदिए । अभिमन्यु अर्जुनका छोरा हुन् । आफ्नो पुत्र मारिएको खबरले अर्जुन शोकाकुल बने । उनलाई श्रीकृष्णले शोक नगर्न सम्झाए । यो शोक गर्ने समय होइन यहाँ लडाइँ गरेर आफ्ना शत्रुमाथि बीजय पाउनुपर्छ भनेर सम्झाए । श्रीकृष्णले सम्झाएपछि अर्जुनले प्रतिज्ञा गरे कि मेरो छोराको मृत्यु जयद्रथले मारेको हुनाले म पनि भोलि सुर्यास्त हुनु अगाडि नै जयद्रथलाई मार्न सकिन भने आत्मदाह गरिदिनेछु ।

जयद्रथले पनि अर्जुनको यो प्रतिज्ञा सूनेर एकदम आत्तियो उसले दुर्योधनसँग आफूलाई बचाउन गुहार माग्न थाल्यो । दुर्योधनले पनि जयद्रथलाई सम्झाउँदै भन्यो- "हे जयद्रथ ! तिमी आतिनु पर्दैन । तिमीलाई हामी जसरी पनि बचाउनेछौं । भोलि सुर्यास्तपछि अर्जुनले आत्मदाह गर्नेछ ।"

भोलिपल्ट अर्जुन जयद्रथलाई खोज्दै कौरवको सेनाभित्र छिरे । तर कौरवहरूले सुरक्षा कवचको रचना गरेर जयद्रथलाई सुरक्षा कवचभित्र राखेका थिए ।

दिन ढल्नै लागेको थियो । सूर्य अस्ताउन अब थोरै समय मात्र बाकी थियो, तर जयद्रथको अत्तोपत्तो थिएन । उसलाई भेटे पो उसँग लडाइँ गरेर उसलाई मार्न सकिन्थ्यो । जयद्रथलाई नै

नभेटेपछि उसलाई कसरी मार्ने? अर्जुनले सुर्यास्त अगावै जयद्रथलाई मार्न नसके आत्मदाह गर्नेछु भन्ने प्रतिज्ञा गरेकाले आत्मदाह गर्नुपर्दथ्यो ।

त्यसैबेला अकस्मात सूर्य पनि अस्ताए । अकाशमा सूर्य देखिएनन् । सूर्य अस्ताएपछि साँझ पनि पर्‍यो । पाण्डवतर्फ रूवाबासी चल्न थाल्यो । अब अर्जुनले आत्मदाह गर्ने भए । यो खबरले पाण्डव पक्षतर्फ तनाव बढ्यो । सबैका मुख मलिन हुन थाल्यो । अर्जुन पनि आजसम्मै रहेछ मेरो आयु भन्ने सोचेर आत्मदाहको तयारी गर्न थाले ।

युधिष्ठिर धेरै दु:खी भए । अर्जुन युधिष्ठिरका लागि दाहिने हात थिए । अर्जुन र भीम पाण्डव पक्षका विशेष वीर पुरूष थिए । भीम बहादुर त थिए तर उनमा मुढेबल मात्र ज्यादा थियो । उनीभित्र बुद्धि पुर्‍याएर काम गर्ने स्वभाव कम थियो । अर्जुन बुद्धि पुर्‍याएर काम गर्दथे । उनी बहादुर र बुद्धिमानी दुवै थिए । अब अर्जुन विना पाण्डवहरूले लडाइँ जित्ने संभावना लगभग समाप्त भएको थियो ।

पत्नी द्रौपदी र माता कुन्ति दुवै धेरै दु:खी भए । विलाप गर्न थाले ।

तर भगवान् कृष्ण भने पटक्कै आत्तिनु भएको थिएन । उहाँ अर्जुन अब आत्मदाह गर्नुपर्ने कुराले कति पनि विचलित हुनुभएन ।

"कौरव पक्षतर्फ धेरै खुशीयाली छायो । अब अर्जुनले आत्मदाह गरिहाल्छन् । अर्जुन मरेपछि पाण्डवहरूलाई सजिलै जित्न सकिन्छ भन्ने कौरवहरूलाई लागिरहेको थियो । दुर्योधन असाध्यै खुशी भयो ।

आजभोलि भए प्रतिज्ञा गरेको कुरा पुऱ्याउनैपर्छ भन्ने थिएन । आज बोल्यो भोलि बिर्स्यो । जे पायो त्यहि बोलिदिने र बोलेको कुरा पूरा नगरे पनि आजको समय जस्तो त्यो समय थिएन ।

आजका नेताहरू त अनेक झुट्टा सपना बाँड्छन् र पूरा गर्ने तर्फ लाग्दैनन् । तर त्यसबेलाको समय सत्यको समय थियो । बोलेपछि बोल्यो, बोल्यो ।

अर्जुन अब आत्मदाह गर्नका लागि तयारी गर्दै थिए । अर्जुनले आत्मदाह गरेको हेर्न कौरवहरू उत्सुक थिए । सबै कौरवहरू खुबै खुशी हुँदै अर्जुनको आत्मदाह हेर्न आए । जयद्रथ पनि बडो आनन्दित हुँदै त्यहाँ हेर्न आयो । अर्जुनलाई झिच्याउन थाल्यो ।

त्यसैबेला अर्को अचम्म भयो । सूर्य झुलुक्क झुल्किए । आकाशमा बादलभित्र लुकेका सूर्य मधुरो प्रकाश पृथ्वीमा फैलाउन थाले । अघि, भर्खरै साँझ परेजस्तो भएको थियो । अहिले फेरि सूर्य झुल्किन्छ । यो के अचम्म भयो?

त्यसैबेला कृष्णले अर्जुनलाई भन्नुभयो– "हे अर्जुन ! सूर्य अस्ताकै छैनन् । तिमी किन आत्मदाह गर्न खोजेको?"

अर्जुन पनि चकित परेका थिए । उनले भने– "अघि त साँझ परेजस्तो भएको थियो त प्रभु ।"

श्रीकृष्णले भन्नुभयो– "यो के भइरहेछ भन्ने बारेमापछि कुरा गरौंला । तिमी पहिले त्यो जयद्रथलाई मारीहाल । त्यो त्यहि पर आइरहेको छ । अब भने सूर्य अस्ताउनै लागेका छन् । सूर्य अस्ताउनु अगाडि जयद्रथदाई मारीहाल र आफ्नो प्रतिज्ञा पूरा गरिहाल ।"



अर्जुनले पनि श्रीकृष्णको आज्ञा मानेर अरू कुरा केही नसोची अघि जति खोज्दा पनि नभेटिएको जयद्रथलाई अहिले त्यहिं अगाडि नै देखेर उसमाथि एउटा वाण प्रहार गरे ।

अर्जुनको लागि जयद्रथलाई मार्न अरू के चाहिन्थ्यो र? त्यहि एउटा वाण काफी थियो । जयद्रथ पनि मर्‍यो, त्यसपछि सूर्य पनि अस्ताए । अर्जुनले आफ्नो प्रतिज्ञा पूरा गरे । उनले आत्मदाह गर्नुपरेन ।

पाण्डवभित्र अब खुशियाली छायो । अघि सबै दु:खी थिए र अब सबै खुशी भए ।

कौरवतर्फ अघि सबै खुशी थिए, अब सबै दु:खी भए ।

आखिर भएको के थियो त? किन घटना यस्तो नाटकीय तिरकाले परिवर्तन भयो?

यहाँनेर श्रीकृष्णले ठूलो भूमिका खेलेका छन् । कृष्णले ठूलो फट्याईं गरेका छन् ।

श्रीकृष्णले सायद यस्तो फट्याईं गर्ने थिएनन् । पहिला कौरवहरूले फट्याई गरेको हुनाले श्रीकृष्णले पनि- "जस्तालाई तस्तै" भन्ने सिद्धान्तअनुसार फटाहाहरूलाई बदलामा फटाहा नै भइदिनुभएको हो ।

जयद्रथसँग जब अर्जुन लड्न आएका थिए त्यसबेला कौरवहरूले जयद्रथलाई लुकाए । सूर्यास्तसम्म लुकाउन पाए अर्जुनले आत्मदाह गर्नेछ भन्ने सोचेर उनीहरूले खुबै चलाखी गरेजस्तो गरेर जयद्रथलाई लुकाए । यो एउटा ठूलो फट्याईं थियो, जबकि लडाइँ नै उसैसँग हुँदैछ भने लड्न दिनुपर्छ । त्यसरी लुकाउन पाइँदैनथ्यो ।

यस फट्याइका विरुद्ध श्रीकृष्णले पनि अर्को फट्याइ गरिदिनुभयो । उहाँले नक्कली बादल उत्पन्न गरेर सूर्यलाई लुकाइ दिनुभयो । बाक्लो बादल भित्र सूर्यलाई लुकाइदिएपछि एक्कासी साँझ परेजस्तो भयो ।

कौरवहरूले सूर्य अस्ताएर साँझ परेको सोचेर जयभद्रथलाई बाहिर निकाले । जब जयद्रथ बाहिर आयो, तब श्रीकृष्णले त्यो नक्कली बादल हटाइदिनुभयो । अब पो बल्ल थाहा भयो सूर्य त अस्ताएकै रहेनछ ।

त्यसबेला कौरवहरूलाई शंका त लागेको थियो, आज किन सूर्य यति चाँडै अस्ताए भनेर शंका त लागेको थियो । तर उनीहरूको दिमागले यतातिर भन्दा अब अर्जुनले आत्मदाह गर्छ कि गर्दैन भन्नेतिर बढी ध्यान गयो । त्यसतर्फ उनीहरूको ध्यान नै गएन ।

यसरी श्रीकृष्णको फट्याइ र जुक्तिले गर्दा अर्जुन आत्मदाह गर्नबाट जोगिएका थिए ।



# गुरु भनेको गुरु नै हो

ब्रह्माका कैयौं पुत्रहरूमध्य एउटा पुत्रको नाम हो.. ऋभु । उनी अचम्मका र अनौठा ऋषि हुन् । अनौठा यसकारण कि उनले अरू ऋषिहरू जस्तो आश्रम बनाएनन् । उनी स्वतन्त्र रूपले घुमी घुमी हिड्ने गर्दथे । उनी मनमौजी ढंगले मस्त भएर हिड्ने गर्दथे । उनलाई आत्मबोध भएको थियो । उनी आत्मा र मोक्षको उपदेश दिदै हिड्ने गर्दथे ।

एक पटक उनी पुलत्स्य ऋषिको आश्रममा पुगे । त्यहाँ उनले पुलत्स्य ऋषिका छोरा निदाशलाई उपदेश दिए । उनले भने- "हेर बाबु ! जीवनको मुख्य ज्ञान भनेको आत्मज्ञान हो ।" जीवनका अरू सबै कुरा आत्मज्ञानका अगाडि फिका छन् । मानिसको जीवन एउटा अवसर हो । यहि जीवनमा मात्र आत्मज्ञान प्राप्त गर्न संभव छ । स्वर्गका देवताहरू पनि मुक्ति पाउन सक्तैनन् । उनीहरूले पनि मुक्ति पाउनको उद्देश्यले मनुष्य जुनी लिन आउँछन् । त्यसैले हेर छोरा तिमी यस जुनीको उपयोग गर । यदि यस जीवनलाई मोजमस्ती र सांसारिक क्रियाकलापमा भुलेर वितायौ भने फेरि तिमी चौरासी लाख योनिमा भटकिन पुग्नेछौ ।"

यति ज्ञान आफ्ना साथी पुलत्स्य ऋषिको छोरा निदाक्षलाई दिएर ऋभु ऋषि त्यहाँबाट बिदा भए । निदाभले ऋभु ऋषिको कुरा मनमा लिए । उनले पनि अब मानव जीवनको उपयोग गर्ने विचार गरे । उनले ध्यान जप तप गरेर आत्मज्ञान प्राप्त गरेरै छाड्ने लक्ष्य राखे । उनी अविवाहित बसेरै तपस्या गर्ने विचार गरे ।

पिता पुलत्स्य ऋषिले आफ्नो छोराको बिहे गर्ने विचार गरे, तर छोराले मानेनन् । उनले भने- "हे पिताजी ! म यो जीवन

खेर फाल्न चाहन्न । बिहे गरेर सांसारिक वासनामा भुल्न म चाहन्न । बिहे गरेपछि सन्तान जन्मन्छन् । अनि सन्तानको जिम्मेवारी पूरा गर्नतर्फ लाग्नुपर्‍यो । पिताजी यसरी मेरो जीवन खेर जानेछ । मेले यो जीवनमा नै आत्मज्ञान प्राप्त गरेरै छाड्ने संकल्प गरेको छु । त्यसैले हे पिताजी ! मलाई विवाह गर्न बाध्य नबनाउनुहोस् ।"



पुलत्स्य ऋषिले छोरालाई सम्झाउँदै भने- "हे छोरा ! आफ्नो छोराछोरीको बिहे गरिदिनु हरेक बाबुआमाको आफ्नो कर्तव्य हो । त्यसैले म तिम्रो बिहे गर्न चाहन्छु । अनि छोरा ! जहाँसम्म

आत्मज्ञानको कुरा छ, बिहे गरेर घरजम गर्दैमा आत्मज्ञान प्राप्त गर्न बाधा आउने होइन । बिहे गरेर विषय वासनामा भूल्नै पर्छ भन्ने छैन । सांसारिक कर्तव्य गरेर पनि आत्मज्ञान प्राप्त गर्न सकिन्छ ।"

छोराले भने- "हे पिताजी ! गृहस्थ जीवनमा भुलेपछि आत्मज्ञान प्राप्तीका लागि जप, तप, ध्यान गर्ने समय नै मिल्दैन, अनि मैले कसरी आत्मज्ञान प्राप्त गर्न सक्छु र? के तपाईं आफ्नो छोरालाई मरेपछि गधा, कुकुर जस्ता अनेकौं चौरासी लाख योनीमा भट्काउन चाहनुहुन्छ?"

पिताले भने- "छोरा ! तिमीले बिहे गरेनौ भने बरू आत्मज्ञान प्राप्त गर्न बाधा हुनेछ । तिमीलाई विषय वासनाले सताउनेछ । ध्यान र साधनामा मन जाँदैन । मन त्यहि विषय-वासनातिर लागिरहन्छ । बरू बिहे गरेपछि तिमीले विषय वासनाको भोग गर्नेछौ । भोग गरेको कुरातर्फ मन भाग्दैन । त्यसपछि तिम्रो मन शान्त भएर ईश्वरको साधनातर्फ लाग्नेछ ।"

पिताको कुरा छोरालाई मन पऱ्यो । उनको अनुभवले पनि यस्तै निष्कर्ष निकालेको थियो । उनी अहिले युवा भइसकेका थिए र उनी जप गर्न लागेको बेलामा र साधनामा आकांक्षाले उनलाई असाध्यै सताउँथ्यो । ध्यान र साधनामा मन जाँदैनथ्यो । यौन इच्छाले भित्रबाट दवाव दिन्थ्यो । राम्रा युवतीहरू देख्दा उनको मन ती युवतीहरूतर्फ भाग्दथ्यो । ध्यान नै एकीकृत हुँदैनथ्यो ।

छोरा निदाक्षले मनमनै सोचे- "सायद विताले भनेको कुरा ठिकै होला । मेरो एउटा साथीले बिहे गरेको छ । उसले ध्यान गर्दा एकाग्र भएर गर्छ । उसले कहिल्यै कुनै युवतीतर्फ हेरेको देखिएको छैन । तर म ध्यानमा बस्न खोज्दा आँखा चिम्लन भन्दा बाहिरका युवतीहरूलाई हेर्न मन लाग्दथ्यो । सायद मैले

बिहे नगरेकोले काम वासनाले सताएको होला, बिहे गरेपछि काम वासनाको अनुभव हुनेछ र त्यो यस्तै चिज रहेछ भनेर जानेपछि मन त्यता जाँदैन अनि ढुक्कले ध्यान, साधना, जप गर्न सकिन्छ ।

उनले यहि सोचेर बिहे गर्न तयार भए । उनले बिहे गरेर पत्नीसहित विरनगर भन्ने ठाउँको देवीका नदीका किनारमा एउटा सुन्दर आश्रम बनाएर बस्न थाले । ध्यान जप साधनामा जोड दिंदै गृहस्थ जीवन पनि चलाउँदै दिनहरू विताउन थाले ।

यस्तैमा एक दिन ऋभु ऋषि घुम्दै घुम्दै तीनै निदाक्षको आश्रममा आइपुगे । ऋभुले त निदाषलाई चिनिहाले, तर निदाक्षले आफूलाई बालककालमा ज्ञान दिएको गुरू यिनै हुन् भनेर चिन्न सकेनन् । तैपनि घरमा आएको पाहुनालाई देवता भन्ने चलन भएकाले उनले ती ऋषिको आदर सत्कार गरे । मिठो भोजनले तृप्त गराए ।"

भोजनपछि निदाक्षले ती ऋषिको परिचय माग्दै सोधे– "हे महर्षि ! हजुरको आश्रम कहाँ छ? हजुर कहाँदेखि आउनुभएको हो? अब कहाँ जाँदै हुनुहुन्छ? हजुरको परिचय पाएमा आभारी हुने थिएँ ।"

ऋषि ऋभुले भने– "हे निदाक्ष ! तिमीले मलाई बिर्सेका त छैनौ भन्ने मलाई लागेको छ । तर हाम्रो भेट हुँदा तिमी सानै थियौ त्यसैले तिमीले चिन्न नसक्नु स्वभाविकै हो । तिमीले मलाई कहाँबाट आउनु भएको भनेर सोध्यौ । म कहिंबाट पनि आएको छैन र कहिं पनि गइरहेको छैन । बरू तिमी यसरी हिँड्न बन्द गर । म त न कहि जान्छु न कही आउँछु । तर तिमी भने धेरै आउनु जानु गरिरहेका छौ । यसलाई रोक, छिटो रोक नत्र तिमीले चौरासी लाख योनिमा भट्कन पर्ला ।"

ऋषिका यस्ता कुरा सूनेपछि ऋभु ऋषिलाई निदाक्षले चिनिहाले । उनले ऋषिका पाउमा आफ्नो शिर राखेर ढोगीदिए । तर निदाक्षकी पत्नी भने ऋषिका कुरा सूनेर दंग परिन् । यी ऋषिले के कुरा गरेका होलान् भनेर अचम्म मानिन् । ऋषि आफू कहाँबाट हिंडेर यहा आएका छन् । अनि अब यहाँबाट हिंडेर कतै जाँदैछन् । तर उनी आफू कहिंबाट नआएको र कहिं पनि नगएको कुरा गर्छन् । अनि यहि बसिरहेका पतिलाई चाहिं हिंडडुल गर्न बन्द गर भन्छन् । कस्तो पागलपनको कुरा गरेको होला? भनेर उनी दंग परिन् । उनलाई अचम्म अझ यस कुराले लाग्यो कि उनका पतिले यस्ता पागलपनका कुरा गर्ने ऋषिलाई खुट्टैमा ढोगीदिए ।

निदाक्षले पत्नीको भाव- "ऋषि ऋभुले बाहिरको हिंडडुलका कुरा गरेका थिएनन् । उनले त भित्र मनको हिडडुलको कुरा गरेका थिए । ऋषि ऋभु त आत्मज्ञान पाइसकेका ऋषि थिए । उनको मन नै थिएन । मन नै नभएको व्यक्तिको भित्रको हिडडुल बन्द हुन्छ ।"

निदाक्षकी पत्नीले जब उनको कुराको रहस्य बुझिन तब पनि उनी दंग परिन्- "ओहो ! ऋषिले त कति गहिरो कुरा गर्नुभएको रहेछ ।" उनले आफ्नो पतिसँग भनिन्- "मैले त उहाँको कुरा नबुझेर उहाँलाई पागल जस्तो ठानेको थिएँ । उहाँले त निकै गहिरो कुरा गर्नुभएको रहेछ ।"

निदाक्षले भने- "गुरू भनेर त्यसै भनिन्छ त? गुरूको कुरा सधैं आत्मज्ञानसँग सम्बन्धित हुन्छ । उनीहरू आत्मज्ञान भन्दा बाहिरको कुरै गर्दैनन् । गुरू भनेको गुरू नै हो । जो सधैं आत्माकै कुरा गर्छ उहि गुरू हो ।"



# कर्णको दानको कथा

महाभारतको लडाइँ भएको समयको कुरा हो । कर्ण र अर्जुनको भयंकर युद्ध चलिरहेको थियो । अर्जुनले कर्णलाई पराजित गरे । कर्ण घाइते भएर जमिनमा लडिरहेका थिए ।



भगवान् श्रीकृष्णले दानवीर कर्णको ठूलो प्रशंसा गर्नुभयो । यो देखेर अर्जुनलाई असह्य भयो । अर्जुनले भने- "हे प्रभु ! तपाईं मेरो चाहिं प्रशंसा गर्नुहन्न तर हरूवा कर्णको किन यति धरै प्रशंसाा गर्नुहुन्छ? लडाइँ त मैले जितेको छु । प्रशंसा त मेरो पो हुनुपर्छ ।"

श्रीकृष्णले भन्नुभयो- "हे अर्जुन ! कहिलेकाहिं हार पनि यति शक्तिशाली हुन्छ कि त्यस्तो हारको प्रशंसा नगरीरहन सकिदैन । कोही व्यक्तिले हारेर पनि जितिरहेको हुन्छ । कोही व्यक्ति जितेर पनि हारेको हुन्छ । लुते जिताइ भन्दा शालीन हारको म प्रशंसा गर्छु ।"

श्रीकृष्णको कुराले अर्जुनलाई बिझ्यो । उनको चित्त दुख्यो मन खिन्न बनाउँदै उनले श्रीकृष्णलाई सोधे– "हे प्रभु ! हजुरले मेरो हारलाई लुते हार भन्न खोज्नु भएको हो?"

श्रीकृष्णले अर्जुनको निन्याउरो र खिन्न अनुहार देखेर हाँस्तै भन्नुभयो– "अर्जुन ! मैले तिमीलाई लुतुरे छौ र तिम्रो जीतलाई लुतुरे जीत भन्न खोजेको कदापी होइन । तिम्रो बीजय पनि उत्कृष्ठ बीजय हो । तिमी साधारण लडाकु होइनौ । तिमी काँतर छैनौ । तिमी वीर छौ । त्यसै कारण त मैले कर्णको प्रशंसा गरेका हुँ । तिमी जस्ता वीरसँग हार्नु पनि इज्जतको हार हो । तिमी जस्ता वीरसँग हार्नुलाई वेइज्जती हार मानिदैन । कर्णले कुनै साधारण व्यक्तिसँग लडेर हारेको भए उनको इज्जत जाने थियो । तिमी जस्ता वीर पुरूषसँग हार्नु पनि इज्जत बढ्ने कुरा हो ।"

श्रीकृष्णले केहीबेर रोकिएर फेरि भन्नुभयो– "तिमीले पनि कुनै साधारण व्यक्तिलाई जितेको भए के इज्जत हुन्थ्यो र? तिमीले पनि कर्ण जस्ता वीरलाई जित्न सक्यौ त्यसैले तिम्रो इज्जत बढेको छ । फेरि याद राख । यहि कर्ण हो आफ्नो कुण्डल र कवच दान नगरेको भए तिमीले उनलाई जित्न मुश्किल थियो ।"

कर्णलाई दानवीर पनि भनिन्छ । उनको नामको अगाडि दानवीर राखेर दानवीर कर्णको रूपमा संवोधन गरिन्छ । उनले आफ्नो कवच र कुण्डल दान गरेकाले उनलाई दानवीर भनिएको हो । कवच र कुण्डल दान गरेपछि उनको मृत्यु निश्चित भएको हो ।

कर्णलाई दानवीरको उपाधि दिइएकोमा अर्जुनलाई खासै चित्त बुझेको थिएन । उनको चित्त बुझाउनका लागि श्रीकृष्णले अर्जुनलाई लिएर कर्णको परीक्षा गर्न जानुभयो ।

अर्जुन र श्रीकृष्ण दुवैजना ब्राह्मणको भेषमा घायल भएर जमिनमा ढलिरहेका कर्णलाई भेट्न गए । कर्ण नजिक पुगेर ब्राह्मणरूपी श्रीकृष्णले भिक्षा माग्नुभयो ।

कर्णले भने- "म आफै मर्न लागिरहेको छु । तपाईंहरूलाई म के भिक्षा दिउँ?"

श्रीकृष्णले भन्नुभयो- "जे दिन सक्नुहुन्छ त्यहि दिनुहोस् । दिनुहुन्न भने हामी फर्कन्छौ, तपाईंलाई पाप लाग्नेछ ।"

पाप लाग्ने डरले कर्णले आतिदै भने- "हे ब्राह्मणहरू ! तपाईंहरू नजानुहोस् । म तपाईंहरूलाई रित्तो फर्काउन चाहन्न । मसँग दुइंवटा सूनका दाँतहरू छन् । म तपाईंलाई भिक्षास्वरूप त्यहि दाँत दिनेछु ।"

कर्णले आफ्ना सूनका दाँत निकालेर दिन लाग्दा ब्राह्मणरूपी श्रीकृष्णले भन्नुभयो- "हे राजन ! तपाईंको मुखबाट निस्केको यो सून जुठो भएको छ, यस्तो जुठो चिज पनि भिक्षामा दिने? फेरि त्यस दाँतमा रगत पनि लागेको छ ।"

कर्णले उत्निखेरै जमिनमा वाण प्रहार गरे र गंगाको पानीलाई त्यहाँ निकाले । त्यहि गंगाजलले दाँतहरू पखाले । गंगाजलले पखालेपछि शुद्ध भएको सूनका दाँत ती ब्राह्मणहरूलाई दिए ।

यो देखेर अर्जुन र श्रीकृष्ण दुवै औधि प्रभावित भए । श्रीकृष्ण र अर्जुनले आफ्नो यथार्थ रूप प्रकट गरे ।

त्यसैबेला आकाशबाट कर्णमाथि पुष्प वर्षा भएको थियो । आकाशमा स्वर्गका देवताहरूले- "दानवीर कर्णको जय !" भन्ने नारा लगाए । आकाश गुञ्जायमान भइरहेको थियो ।

कर्णले आफ्नो सामुन्ने श्रीकृष्णलाई देखेर उहाँको स्तुति गाउन थाले ।

कर्णको स्तुतिबाट प्रसन्न भएका श्रीकृष्णले कर्णलाई आशीर्वाद दिंदै भने- "हे दानवीर ! जबसम्म आकाशमा चन्द्र, सूर्य रहन्छन् तबसम्म मानिसहरूले तिम्रो दानवीरताको चर्चा गरिरहनेछन् । मानिसहरू तिम्रो दानको उल्लेख गरिरहनेछन् । मान्छेहरूले तिमीलाई सम्झिरहनेछन् ।"

श्रीकृष्णको त्यसै आशीर्वादको कारण आज पनि मानिसहरूले कर्णको चर्चा गरिरहेका छन् । यो लेख पनि वा यो लेख तयार पारेर कर्णको दानवीरताको प्रशंसा र चर्चा गर्नुका पछाडि पनि श्रीकृष्णकै आशीर्वाद रहेको छ कि !



# किचक मारिएको कथा

आजभोलि कसैले असाध्यै दु:ख दियो र सतायो भने त्यसलाई भन्ने गर्छौं– "कस्तो किच्चक रहेछ यो ।" अरूलाई दु:ख दिने, सताउने बदमासलाई दिइने यो उपाधिको सम्वन्ध महाभारतको कथासँग जोडिएको छ । महाभारतामा एउटा यस्तै पात्र छ जो अरूलाई विनाकारण असाध्यै सताउँछ । उसको स्वभाव नै दुष्ट किसिमको थियो । त्यो किचक अत्यन्त पापी, उद्धण्ड र कपटी थियो । अनि उ कुनै साधारण व्यक्ति पनि थिएन उ विराट राजाको मुख्य सेनापति थियो ।

कुनै दुष्ट व्यक्ति ठूलो पदमा पुग्यो भने देश र जनताले साह्रै दु:ख पाउँछन् । यस्ता दुष्ट मानिसका ठूलो पदमा पुग्नु भनेको जनताका लागि दुर्भाग्य हो । जुन देशका जनता अभागी छन् त्यस्तो देशमा शासक नै दुष्ट पारिदिन्छ । राजा नै दुष्ट पारिदिन्छ । पापी राजा भएको देशका जनता पनि आभागी हुन् ।

विराट देशका राजा त असल थिए, तर मुख्य सेनापति दुष्ट थियो । त्यो दुष्ट किचकले गर्दा पाण्डवहरूले दु:ख पाउनु पऱ्यो ।

पाण्डवहरूले बाह्र वर्षको वनवास पूरा गरेपछि एक वर्षको गुप्तवासको समय गुजारीरहेका थिए । गुप्तवासको अर्थ उनीहरूका शत्रु कौरवहरूले नदेखिने गरी लुकेर पाण्डवहरूले एक वर्ष बिताउनु पर्दथ्यो ।

पाण्डवहरूले भेष बदले । भेष नबदले त कौरवहरूले पत्ता लगाईहाल्छन् । चिनीहाल्छन् । कौरवहरूले यदि चिने भने फेरि बाह्र वर्ष पाण्डवहरूले वनवास बस्नुपर्दथ्यो । जुवामा हारेकाको लागि यहि नै शर्त थियो । त्यसैले पाण्डवहरूले अत्यन्त

होशियारीपूर्वक भेष बदलेर कसैले पनि चिन्न नसक्ने गरेर विराट राजाको दरवारमा नोकरको रूपमा बसेका थिए ।

पाँच दाजुभाइहरूले आफूहरूलाई गन्धर्वको रूपमा परिचय दिए भने द्रौपदीलाई आफ्नी पत्नीको रूपमा परिचय गराए । द्रौपदीको नाम सौरन्ध्री भनेर चिनाइयो । उनलाई राजा विराटकी रानीको नोकर्नीको रूपमा राखियो ।

सैरन्ध्री विराट राजाकी रानी सुदेष्णाको व्यक्तिगत काममा सहयोग गर्थिन् । एक दिन सेनापति किचकले द्रौपदीलाई देख्यो । उनी अति सुन्दरी थिइन् । यस्ती सुन्दरी युवतीलाई रानीको नोकर्नीको रूपमा देखेर उ दंग पऱ्यो । किचकले सैरन्ध्रीलाई आफूले बिहे गर्ने प्रस्ताव राख्यो । सैरन्ध्रीले इन्कार गरिन् ।

सैरन्ध्रीलाई उसले पछ्याउन छाडेन । उसले हत्ते नै गऱ्यो । तर सैरन्ध्रीले उसलाई वास्ता नै गरिनन् । किचकले सोध्यो- - "एउटी नोकर्नीले पनि मलाई नपत्याउने?" उ सैरन्ध्रीसँग असाध्यै रिसायो । उसले मौका पाएको बेलामा सैरन्ध्रीलाई बलात्कार गर्ने बिचार गऱ्यो ।

किचक दुष्ट थियो । उ राजाको सालो पर्दथ्यो । त्यहि नातावादको कारणले गर्दा उसले सेनापतिको पद पाएको थियो तर उ सेनापति हुन योग्य व्यक्ति थिएन । त्यसबेला पनि आजभोलि जस्तै नातावाद र कृपावाद हावी थियो ।

आफ्नो भाइले आफ्नी नोकर्नी सैरन्ध्रीलाई मन पराएको छ भन्ने थाहा पाएर रानी सुदेष्णाले एक दिन एउटा बहाना बनाएर सैरन्ध्रीलाई किचकको कोठामा पठाइन् । किचकले मौका पाएर सैरन्ध्रीलाई बलात्कार गर्न खोज्यो । उनको धोती फुकाउन खोज्यो । सैरन्ध्री असाध्यै आत्तिइन । उनी भाग्न थालिन् । उनी

भागेर रानीकहाँ पुगिन र किचकको कुरा सूनाइन् । तर रानीले उल्टै सैरन्ध्रीलाई गाली गरिन् । उनले आफ्नो भाइको दोष ढाकछोप गरिन् ।

भीमले यो कुरा थाहा पाए । उनी पनि विराटकै दरवारमा काम गर्न बसेका थिए । उनी पनि नोकर नै थिए । यो कुरा थाहा पाएपछि भीमलाई किचकसँग साह्रै नै रीस उठ्यो । किचकलाई जसरी पनि मार्नेछु भन्ने उनले संकल्प गरे ।

कस्तो आपदको कुरा थियो । एकातिर आफ्नो वास्तविक परिचय खुलाउन सकिएको छैन । दुष्ट कौरवहरूले पता लगाउने वित्तिकै शर्तअनुसार फेरि बाह्र वर्ष वनवास बस्नुपर्नेछ । जसरी पनि लुकेर छिरेर गोप्य रूपले एक वर्ष विताउनु परेको छ । यसरी लुकेर बस्दा अनेक संकटहरू आइपरेका छन् । अहिले आएको यस संकटलाई कसरी पन्छाउने भनेर भीमसेनले सोच्न थाले ।

भीमसेनले द्रौपदीलाई भने– "हे द्रौपदी संकटरहेको बेलामा जुक्तिले काम लिनुपर्छ । भोलि किचकलाई तिमीले भेटेर तिमीलाई मन पराउँछु भन र बेलुका एकान्तमा व्यायामशालामा भेटौं भनेर उसलाई त्याहा ल्याउनु बाँकी काम म गरौंला ।"

भोलिपल्ट सैरन्ध्रीले किचकलाई भेटेर भनिन्– "हे किचक ! म तपाईंसँग विहे गर्न राजी छु । दिउँसो त काम गर्नुपर्छ भरे बेलुका व्यायामशालामा भेट गरौं ।"

किचक रात परेपछि व्यायामशालामा गयो । भीमसेन त्यहीं व्यायामशालाको काम गर्दथे । उनी त्यहीं लुकेर बसेका थिए । उनले सैरन्ध्रीको जस्तै भेष बनाएर बसेका थिए । किचक आयो र उनलाई सैरन्ध्री ठानेर अंगालो हालेर चुम्बन गर्न खोज्यो । त्यसैबेला भीमसेनले उसलाई जोडसँग एक मुक्का ठोके ।



दुवैजनाको भयंकर मल्लयुद्ध चल्यो । किचकको भीमसेनसँग के लाग्थ्यो र? अन्तमा भिमसेनले घाँटी थिचेर किचकको जीवन समाप्त गरिदिए ।

भोलिपल्ट किचक मारिएको कुरा दरवारभरि फैलियो, त्यो देशैभरि फैलियो । किचकबाट सताइएका र दुःख पाएका जनताहरू किचक मरेको सूनेर धेरै खुशी भए तर रानी र किचकका आफन्तहरू दुःखी भए ।

किचकका भाइहरूले किचक मारीनुमा सैरन्ध्रीप्रति शंका गरे । उनीहरूले किचकको लाससँगै सैरन्ध्रीलाई पनि जलाउन खोजेका थिए । यो थाहा पाएर भिमसेनले ती किचकका भाइहरूलाई पनि मारिदिए ।

भिमसेनले अत्यन्त होरियारीपूर्वक अज्ञातवासको समयमा यस्तो जटिल काम सम्पन्न गरे ।



# बुद्धि बिनाको धन छैन

दर्शनशास्त्रमा धेरै किसिमका दर्शनहरू पढ्न पाइन्छ । ती मध्य एउटा दर्शनको नाम हो- विसँगतिवाद !

विसँगतिवादको अर्थ हुन्छ जीवनमा कुनै सँगति छैन । यहाँ कुनै लयवद्धता देखिदैन । कसैसँग धन छ, तर उसँग त्यो धन भोग गर्न समय छैन । कसैसँग मिठो खानेकुरा खाने सुविधा छ तर उसको शरीरले त्यो खानेकुरा पचाउन सक्तैन । जोसँग मिठो खानेकुरा पचाउन सक्ने शरीर छ उसलाई मिठो खानेकुरा उपलब्ध छैन । जोसँग निन्द्रा छ उसलाई सुत्नको लागि कुनै खाट छैन । जोसँग सुविधायुक्त पलङ छ उसलाई निन्द्रा लाग्दैन ।

जोसँग भोक छ उसले खान पाउँदैन । जोसँग प्रसस्त खानेकुरा छ उसलाई भोक नै लाग्दैन ।

त्यसैले कहिलेकाँही महलका सम्पन्न धनी र महाजनहरू सडकका ढाक्रेहरूको ईर्ष्या गर्न थाल्छन् । ढाक्रेहरू सडकका पोटीहरू चौतारिहरूमा, शहरका प्रतिक्षालयहरूमा पनि मस्त निन्द्रामा सुतिरहेका भेटिन्छन् । महलमा बस्ने त्यो महाजनलाई निन्द्रा नलागेर ट्याव्लेट खाइरहनुपरेको छ ।

एउटा लेखक बाँचुन्जेल गरिबीमा जिन्दगी बिताउन कसैले वास्ता गर्दैन । उ मरिसकेपछि बल्ल उसको महत्त्व बुझिन्छ र उसलाई ठूलो पुरस्कार दिइन्छ ।

जोसँग धन छ उसको बुद्धि छैन, जोसँग बुद्धि छ, विवेक छ उसँग धन छैन । यसैको नाम हो विसँगतिवाद ।

यहि विसँगतिवादलाई झल्काउने एउटा धार्मिक कथा छ ।

गरिब दाउरेले एउटा राजाको सेवा गरेछ । राजा दाउरेसँग खुशी भएछन् । उसलाई एउटा चन्दनको घना जंगल दान दिएछन् ।

अब उसले त्यो जंगलका काठ बेचेर प्रशस्त पैसा कमाउन सक्दैनथ्यो । चन्दनको जंगल भनेको ठूलो धन हो । साधारण वनलाई त धन भनिन्छ ।- "नेपालको वन देशको धन" भन्ने उखान नै छ । चन्दनको वन त झन ठूलो धन हो । तर दाउरे बुद्धिहीन थियो । मूर्ख थियो । उसले त्यो चन्दनको महत्त्व बुझेको थिएन ।

मुर्खलाई चन्दनको काठ पनि साधारण दाउरा जस्तै लागेछ । उसले सबै जंगलका काठ दाउराको रूपमा बेचेर सक्यो । उ कंगालको कंगाल नै रह्यो ।

धन हुनेसँग विवेक हुँदैन बुद्धि हुँदैन । त्यसैले उसले धनलाई चिन्न सक्तैन । उ फेरि गरिब बन्छ ।

अर्को तर्फ, यदि त्यो दाउरेले त्यो चन्दनलाई चिनेर दाउराको रूपमा नबेचेर चन्दनकै रूपमा बेचेर प्रशस्त पैसा कमाएको भए उ बुद्धिमान मानिन्थ्यो? भन्ने प्रश्न पनि उठ्न सक्छ ।

मानौं उसले चन्दनलाई चिनेर चन्दनकै भाउमा बेचेर पैसा कमायो । धनी पनि बन्यो । त्यसपछि उसले धनको प्रयोग कसरी गऱ्यो? भन्ने कुराले उसको बुद्धिमता नापिन्छ । यदि उसले आफूले कमाएको धन खराब कार्यमा प्रयोग गऱ्यो भने उसलाई विवेकशील र बुद्धिमान भन्न मिल्दैन ।

आज यो देशमा धेरै धनीहरू छन् । तिनीहरूमध्ये धेरैले आफ्नो धन वेश्याहरूसँग सुतेर, रक्सी पिएर मासु खाएर पैसाको

उपयोग गर्छन् । मोजमस्ती शान रवाफ देखाएर आफ्नो धनको उपयोग गरेको देखिन्छ । के यो बुद्धिमानीको परिचय हो त?

महंगा गाडी चढेर विलासी जीवन बाँचेर धनको उपयोग गर्नु बुद्धिमानीको परिचय हुनै सक्तैन । धनीहरूले यस्तो तिरकाले धनको उपयोग गर्नाले गरिबहरूमा इर्ष्या पैदा हुन्छ । यसले गर्दा गरिब र धनी बीचमा संघर्ष शुरू हुन्छ ।

धनीहरूले गलत शैलीले जीवन बिताउने हुनाले चोर र डाँकाहरू पैदा भएका हुन् । धनीहरूले गरिबहरूलाई डिच्याएर जीवन विताउने गर्नाले विकृति पैदा भएको हो ।

त्यसैले धनीहरूले धनको उपयोग विवेकपूर्ण ढंगले गर्नुपर्छ । उनीहरूको धनको प्रयोग गरिवहरूलाई दान दिएर, गरिबहरूको सेवा गरेर प्रयोग गर्नुपर्ने हो । वास्तवमा धनीहरूको कर्तव्य सादा जीवन र उच्च विचार अपनाउनु हो । तर धनीहरू के गरिरहेका छन्? उनीहरू कंस र रावणले जस्तो जीवन विताइरहेका छन् ।

यस कुरालाई हाम्रा ऋषिमुनिहरूले बुझेका हुनाले धनसँगै बुद्धि पनि कमाउनु पर्छ, विवेक पनि कमाउनुपर्छ भन्ने सल्लाह दिएका थिए । यसको लागि उनीहरूले लक्ष्मी र गणेशको पूजा सँगसँगै गर्ने चलन चलाएका हुन् ।

लक्ष्मी धनकी देवीको नाम हो, गणेश, बुद्धिका र विवेकका देवताको नाम हो । दुवैको सँगसँगै उपासना गर्नाले बुद्धिका साथ धन या धनका साथमा बुद्धि पनि आउँछ । विवेक पनि जाग्छ । जसको धन र बुद्धि दुवै छ उसले आफ्नो धनको प्रयोग विवेकपूर्ण ढंगले गर्छ । जनताको सेवामा धनलाई लगाउँछ ।

तर समाजमा हेर्दा विसँगति देखिन्छ । विद्वान्हरूसँग धन छैन, गरिब छन् । धनीहरूमा विद्वता र विवेक छैन । यसको कारण वेरोजगारी बढेको, बेकारी बढेको छ । यसले गर्दा चोरी

डकैती, हत्या, लुटपाटका घटनाहरू बढिरहेका छन् । यसले अन्ततः धनीहरूलाई पनि नोक्सान पुऱ्याउँछ ।

समाजमा लयवद्धता भएन, धर्म नष्ट भयो भनेर समाजबाट विवेक हरायो भने अन्तिममा धनीहरूकै नोक्सान हुन्छ । आजका धनीहरू त मोजमस्तीमै दिन विताउलान् तर तिनीहरूले आज गरेको पाप तीनका नाति पनातिहरूले भोग्नुपर्ने हुन्छ ।

एउटा व्यक्तिले घोर तपस्या गरेपछि अलौकिक शक्ति प्राप्त भयो । त्यो शक्तिको प्राप्तिपछि उनी सरासर राजाको दरवारमा गएछन् । राजालाई भनेछन्- "महाराज ! आफ्नो मुकुट फुकालेर भुइमा राख्नुहोस् ।"

अकस्मात दरबारमा आएर आदेशको शैलीमा यस्तो सुझाव दिनेप्रति राजा क्रुद्ध भएछन् र राजाले मुकुट फुकाल्नुको सट्टा केही भन्न खोज्दै थिए, तर ती व्यक्तिले आफै मुकुट फुकालेर भुइमा फालिदिए । जब मुकुट भुईंमा फालियो, तत्काल मुकुट भित्रबाट एउटा डरलाग्दो कालो सर्प बाहिर निस्केछ । राजा झसँग भए । तब पो राजाले मुकुट खोल्न लगाउनुको अर्थ बुझे । उनी त्यस व्यक्तिप्रति अति खुशी भए । त्यस व्यक्तिलाई मन्त्री बनाइयो । उनी राजासँगै राजदरबारमा बस्न थाले ।

एकदिन ती व्यक्तिले दरबारमा भएका सबैलाई बाहिर निस्कन भने । उनका कुरा सूनेर सबै छक्क परे । तर यसमा कुनै अर्थ छ होला भन्ने ठानेर सबै बाहिर निस्किए । सबैलाई उनीप्रति विश्वास थियो । उनले यसअघि पनि अनेक चमत्कारपूर्ण भविष्यवाणी गरेका थिए ।

राजालगाईत सबैजना बाहिर निस्केपछि महल गर्ल्याम्म ढल्यो । सबैजना चकित परे । सबैले ती व्यक्तिको तारिफ गरे । उनलाई राजाले प्रशस्त धन पुरस्कार स्वरूप दिए ।

विस्तारै ती व्यक्तिमा आफ्नो शक्तिप्रति घमण्ड जाग्दै गयो। उनले साधना गर्न अल्छी गर्न थाले। उनले पहिले गणेश र लक्ष्मीलाई साथै राखेर साधना गर्दथे। एकदिन उनले गणेशलाई हटाइदिए। त्यस दिनदेखि उनी धनी त बने तर उनको बुद्धिमता हराएछ।

अब उनले गरेको अनुमान र भविष्यवाणी फेल खान थाल्यो। पहिले उनले गरेका अनुमान सही हुन्थ्यो। उनलाई बुद्धिले साथ दिएको थियो। तर अब फेल खायो। उनी धनी त भए तर बुद्धि भएन। बुद्धिहीन भएकोले उनले गरेका भविष्यवाणी मिल्न छाडेपछि राजाले मन्त्रि पदबाट निकालीदिए।

घमण्ड नै बुद्धिको शत्रु हो। जब जीवनमा धन र बुद्धिका विसँगति आउँछ, जीवन, कष्टप्रद हुन्छ। त्यसैले यी दुईबीच सन्तुलन र सँगति हुन आवश्यक छ। विसँगतिवादी नबनौं सँगतिवादी बनौं।



# बाउछोराको युद्ध

आजभोलि कतै कतै बाउछोराबीच झगडा भएको सुनिन्छ । बाउछोरामा मुद्दा परेको सुनिन्छ । हातै हालाहाल गरेर झगडा गरेको पनि सुनिन्छ । यो सुन्दा मान्छेहरू भन्छन्- "यो कलियुग हो । कलियुगमा यस्तै हुन्छ । बाउलाई छोराले टेर्दैन । बाउलाई छोराले कुट्छ ।"

तर कलियुगमा मात्र होइन भगवान् राम जन्मेको त्रेतायुगमा पनि बाउछोरा बीचमा लडाइँ भएको छ । छोराले बाउलाई हात छोडेको एउटा घटना प्रसिद्ध छ । यस्तो घटना घटेको कुनै साधारण परिवारभित्र होइन । कुनै साधारण परिवारभित्र भएको भए त ती नबुझ्ने सामान्य परिवारले यस्तो गर्नुलाई स्वभाविकै मान्न सकिन्थ्यो । तर एउटा प्रतिष्ठित र सबैले मानेको व्यक्तिकै जीवनमा यस्तो घटना भएको छ । लवकुशसँग रामको लडाइँलाई उल्लेख गर्न खोजिएको ठान्नु भएको होला, तर त्यस्तो होइन । लव र कुशको पनि आफ्नै पिता रामसँग लडाइँ भएको थियो, तर त्यो लडाइँ बाउछोरा बीचको नाता थाहा नपाएर भएको लडाइँ थियो । तर बाउ छोरा हौं भन्ने थाहा हुँदा हुँदै पनि लडाइँ भएको अर्को एउटा घटना छ ।

यो घटना घटेको हो रामभक्त हनुमानको जीवनमा । हनुमानलाई त बाल ब्रह्मचारी मानिन्छ । उनका त छोराहरू नै छैनन्, कसरी उनको आफ्नो छोरासँग लडाइँ भएको हो भन्ने लाग्न सक्छ । उनका आफ्नो पितासँग नभएर उनको आफ्नो छोरासँग लडाइँ भएको थियो । बाल ब्रह्मचारी हनुमानले विहे नै गरेका थिएनन्, उनको छोरा कसरी भए त? भन्ने प्रश्न उठ्नु स्वभाविकै हो । तर यी दुवै कुरा सत्य हुन् । हनुमान बाल

ब्रह्मचारी पनि हुन्, अनि उनका छोरा पनि थिए कस्तो विरोधाभाषपूर्ण कुरा ।

हनुमानले जब आफ्नो पुच्छरको आगोले लंका जलाइरहेका थिए, त्यसबेला उनको आफ्नै पुच्छरमा लागेको तापले शरीरभरि पसिना आयो । पसिनाले निथ्रुक्क भिजेको थियो उनको शरीर । लंकामा आगो लगाएर गर्र समुन्द्रको पानीमा पुच्छर डुबाएर आगो निभाए । त्यसैबेला समुन्द्रमा उनको शरीरबाट निस्केका पसिनाका थोपाहरू खसे । ती थोपाहरूमध्य एउटा थोपा एउटा माछाले निल्न पुगेछ । त्यो पसिना त माछाको पेटमा पुगेपछि बाँदरको रूपमा जन्म लिन पुगेछ । पछि माछा मार्नेहरूले त्यो माछा पक्रेछन् । त्यस माछालाई मारिसकेपछि पेटको भुँडी फाल्न भुँडी चिर्न लाग्दा बाँदरको वच्चा भेट्टाएर आश्चर्य मानेर आफ्नो देशको राजालाई खबर गरेछन् । राजाले त्यो बच्चालाई आफ्नो दरबारमा पालेर हुर्काए । त्यो बच्चाको नाम मकरध्वज राखियो । त्यो देशका राजा अहिरावणले त्यो बच्चा निकै पराक्रमी हुनेछ भन्ने अड्कल गरेर यसलेपछि देशको लागि ठूलै काम गर्छ भन्ने विश्वासले निकै ध्यान पुऱ्याएर हुर्काए ।

मकरध्वज पनि निकै पराक्रमी शूरवीर भएर निस्कियो । हनुमान जस्तै साहसी र आँटिलो थियो । उ ठूलो भएपछि राजा अहिरावणले उसलाई पाताल देशको गेटपालेको काममा खटाइदिए ।

यता हनुमानलाई आफ्नो छोरो भइसकेको छ भन्ने थाहा पनि थिएन । लंकामा राम र लक्ष्मणको युद्ध भइरहँदा एकदिन पातालमा बन्धक बनाएर राख्न अहिरावणलाई अह्रायो । अहिरावणले पनि दुई भाइलाई पाताल दरबारमा बन्दी बनाएर राख्यो । यो कुरा थाहा पाएपछि राम लक्ष्मणलाई छुटाउन

हनुमान पाताल गए । गेटमा आफ्नो जस्तै अनुहारको बाँदरलाई देखेर अचम्म माने र सोधे- "तँ को होस्? कसरी तेरो अनुहार मेरो जस्तो भयो? कतै छल गरेर मायाले मेरो रूपमा बसेको कुनै राक्षस त होइनस्?"



मकरध्वजले भने- "मैले छल गरेर बसेको होइन । म पवनपुत्र हनुमानको पुत्र हुँ ।"

हनुमान झन आश्चर्यमा परे । आफूले त बिहे पनि गरेको छैन । बाल ब्रह्मचारीको बिहे नै भएको छैन भने छोरो कसरी हुनु? उनले फेरि सोधे- "म बाल ब्रह्मचारी हुँ । मैले बिहे नै गरेको छैन, तँ कसरी मेरो छोरो भइस्?"

हनुमानले यसरी भनेपछि मकरध्वजले यिनै मेरा पिता हनुमान रहेछन् भन्ने चिन्यो र ढोगीदियो । त्यसपछि सबै वृतान्त बताउँदै भन्यो- "म तपाईंको पसिना पुत्र हुँ ।"

यति सूनेपछि हनुमानले पनि मकरध्वजलाई आफ्नो पुत्रको रूपमा स्वीकार गरे । त्यसपछि उनले आफू त्यहाँ आउनुको उद्देश्य बताउँदै भित्र पस्न खोजे । तर मकरध्वजले हनुमानलाई

छेक्दै भने- "पिताजी ! म हजुरको पुत्र त हुँ तर अहिले म यस गेटको रक्षाको लागि बसेको छु । राजा अहिरावणको आदेश विना म तपाईंलाई भित्र पस्न दिन सक्तिन । हनुमानले धेरै सम्झाउँदा पनि मकरध्वजले मानेन । उसले नुनको सोझो गर्नु थियो ।

मकरध्वजले नमानेपछि हनुमानले उसलाई जवरजस्ती धकेलेर भित्र पस्न खोजे । तर मकरध्वजले हनुमानलाई जवर्जस्ती गर्न रोक्यो । यसले गर्दा दुवै बाउछोराबीच घमासान लडाइँ भयो । अन्तमा बाउ हनुमानले छोरा मकरध्वजलाई आफ्नो पुच्छरले बाँधेर बेरीदिए । उसलाई पुच्छरमै बेरेर उनी पाताल देश भित्र पसे । राजा अहिरावणको दरबारमा पुगे र हनुमानले राजासँग युद्ध गरे । अहिरावणलाई मारिदिए । राम लक्ष्मणलाई लिएर बाहिर निस्किए । रामले हनुमानको पुच्छरमा बाँधिएको बाँदर को हो भनि सोध्दा हनुमानले उ आफ्नो छोरो मकरध्वज भएको बताए । यो सूनेर राम पनि छक्क परे । उनले सोधे- "तिम्रो त बिहे भएकै छेन । कसरी तिम्रो छोरा भयो?"

हनुमानले सबै वृत्तान्त सूनाइदिए ।



# आफ्नै सेवा गरौं

एकपटक एउटा पिताले आफ्नो छोरालाई सम्झाउँदै भनेछ– "हेर छोरा ! तिमीलाई ईश्वरले अरूको सेवा गर्नका लागि जन्माएका हुन्, त्यसैले तिमी अरूको सेवामा लाग । अरूको सेवा गर्नाले धर्म मिल्छ । सेवा नै धर्म हो । सेवा गरे मेवा पाइन्छ छोरा !"

पूरानो जमानाको कुरा मान्ने छोरा भएको हुन्थ्यो भने छोराले– "हस पिताजी !" भनेर आफ्नो पिताको आज्ञा मानेर उ अरूको सेवा गर्न जान्थ्यो । गरिबहरूको सेवामा जुट्दथ्यो । पहिलेको जमानमा आफ्नो पिताको आज्ञालाई मान्नु परम धर्म मानिन्थ्यो । पिताको आज्ञा नाघ्नु हुँदैन भन्ने मान्यता थियो । पितालाई भगवान् सरह मान्नुपर्दथ्यो "पितृदेवो भवः" भन्ने चलन थियो । त्यसैले पहिलेको समयको कुरा भएको भए छोराले पिताको आज्ञा मानेर सरासर अरूको भलाइमा जुट्थ्यो । रामले आफ्ना पिताको आज्ञा मानेर जंगलमा गए झैं उसले पनि पिताको आज्ञा मानेर परसेवा मा लाग्दथ्यो । तर आज जमाना फेरिएको छ ।

आजको छोराले पिताले दिएको आज्ञालाई सोच्न थाल्छ । पिताले किन यस्तो भन्यो भनेर विचार गर्न थाल्छ । किन, कसरी केका लागि ? भनेर प्रश्न गर्न थाल्छ । पुरानो समयमा किन, के का लागि? यसरी प्रश्न गर्नु पाप मानिन्थ्यो । पिताको र गुरूको आज्ञालाई अटेरी गर्न हुँदैन भन्ने मान्यता थियो ।

त्यो छोरो आधुनिक छोरो परेछ । क्रान्तिकारी र विद्रोही छोरो परेछ । उसले विचार गर्न थालेछ । पिताले भनेका थिए– "तिमीलाई ईश्वरले अरूको सेवा गर्न जन्माएका हुन् ।" त्यो विद्रोही छोराले विचार गर्न थालेछ कि मलाई अरूको सेवा गर्न

जन्माएका हुन् । त्यसो भए अरूलाई किन जन्माएका रहेछन् ईश्वरले? सायद अरूलाई चाहिं मेरो सेवा गर्न जन्माएका होलान्, यो कस्तो कुरा हो । अरूलाई मेरो सेवा गर्न लगाउँछन् मलाई चाहिं अरूको सेवा गर्न लागउँछन् । उसलाई यो अल्लि नमिलेको कुरा जस्तो लागेछ । उसले आफ्नो पितालाई भन्यो– "पिताजी ! मलाई अरूको सेवा गर्न जन्माएका ईश्वरले अरूलाई किन जन्माए? अरूलाई चाहिं पक्कै मेरो सेवा गर्न जन्माए होलान् । त्यसो भए ईश्वरलाई व्यवहार गर्न आउँदो रहेनछ । मलाई अरूको सेवामा र अरूलाई मेरो सेवामा लगाउने यस्तो झञ्झट किन गर्नुपर्‍यो? यसको बदला सबैले आ–आफ्नै सेवा गरे भइहाल्यो नि? म अरूको सेवा गरौं, अरू मेरो सेवा गरून्? यस्तो दोहोरो झञ्झट किन गर्ने? सबैले आ–आफ्नै सेवा गर्नु राम्रो हो जस्तो लाग्छ मलाई ।"

छोराको कुरा बाउलाई पनि ठिकै लाग्यो । किन सबैले अरूको सेवामा लाग्ने? सबैले आ–आफ्नै कल्याणमा जुटे भइहाल्यो नि ! भन्ने विचार बाउलाई चित्त बुझेछ ।

यसतै अर्को कथा पनि छ । एउटा गाउँमा एउटा पादरी आएछ । गाउँको स्कुलका बच्चाहरूलाई प्रवचन गर्न गएछ । प्रवचनमा उसले भनेछ– "हेर बाबु नानी हो, तिमीहरूले अरूको सेवा गर्नु । सेवा गर्‍यौ भने भगवान् खुशी हुन्छन् । तिमीहरूलाई स्वर्गमा बास मिल्नेछ ।"

एउटा बालकले ध्यानपूर्वक पादरीका कुरा सुनिरहेको थियो । उसले अचानक उठेर सोधेछ– "फादर ! सेवा गर्न पनि त सेवा गर्नेसँग साधन हुनुपर्‍यो, शक्ति हुनुपर्‍यो । यदि उ आफैलाई सेवाको खाँचो छ भने उसले अरूलाई कसरी सेवा गर्न सक्छ?

पादरीले एउटा सानो बालकको यस्तो तर्क सूनेर दंग परे । हुन पनि हो हुनेले र सक्नेले त अरूको सेवा गर्छ तर नहुने र नसक्नेले अरूको सेवा कसरी गर्न सक्छ?

त्यो बालकले फेरि भन्यो- "त्यसैले फादर अरूको सेवा गर्नु भन्दा पहिला आफ्नै सेवा गरेर आफू बलियो र सक्षम हुनुपर्‍यो । अनिमात्रै अरूको सेवा गर्नतिर लाग्नु पर्‍यो ।

बालकका तर्कयुक्त प्रश्नको जवाफ दिन पादरी असक्षम थिए । उनी त्यहाँबाट चुपचाप बाहिर निस्किए ।



# वेश्या स्वर्ग गइ, पण्डित नरक गयो

एउटा सुन्दर नदीको किनारमा एउटा ठूलो मन्दिर थियो । त्यो मन्दिरमा एउटा पण्डित बस्दथ्यो । उ भर्खरको युवा थियो । मन्दिरमा सधैं विहानैदेखि मानिसहरूको भिड लाग्दथ्यो । त्यो मन्दिरप्रति मानिसहरूको ठूलो श्रद्धा थियो । त्यो भेकको मात्र नभएर टाढा टाढाबाट पनि मानिसहरू त्यस मन्दिरको दर्शन गर्न आउने गर्दथे ।

ती पण्डित सधैं बिहानै उठेर नुवाइधुवाइ गरेपछि मन्दिरमा पूजा गर्ने गर्दथे । आएका भक्तहरूलाई फूल अक्षता दिने, टिका लगाईदिने, प्रसाद बाँड्ने गर्दथे । दिउँसो प्रवचन गर्ने गर्दथे । दैनिक जसो त्यहाँ भजन कीर्तन हुने गर्दथ्यो । साँझमा आरती हुन्थ्यो । त्यो मन्दिरमा सधैं शंख र घण्टा बज्ने गर्दथ्यो । भजन गाउँदा हार्मोनियमको मिठो धुन बज्दथ्यो र त्यो धुन टाढासम्म सुनिने गर्दथ्यो ।

मन्दिरको पूरै वातावरण धार्मिक किसिमको थियो । त्यहाँ पूजा, पाठ, यज्ञ, जप, तप, भजन, किर्तन जस्ता धार्मिक कार्यहरू बाहेक अरू केही हुँदैनथ्यो । पण्डित सधैं धार्मिक माहोलमा व्यस्त हुने गर्दथे ।

त्यो मन्दिरको ठिक पारी नदीको किनारमै एउटा भव्य महल थियो । त्यस महलमा अत्यन्त सुन्दरी युवा उमेरकी वेश्या बस्ने गर्दथी । त्यहाँ पनि दैनिक जसो मानिसहरूको भिड लाग्ने गर्दथ्यो । धनी मानिसहरू र युवा-युवतीहरूको भिड लाग्दथ्यो । त्यहाँ सधैं नाचगान रसरंग हुने गर्दथ्यो । रक्सीको खोलो बग्दथ्यो । रक्सी मासु चुरोट जस्ता वस्तुहरू त्यहाँ दिनहुँ ठूलो मात्रामा भित्रिन्थे । अत्यन्तै रमाइलो वातावरण थियो त्यहाँको ।

मन्दिरमा भजन किर्तन हुन्थ्यो भने पारी महलमा अनेकौं आधुनिक गीतहरू बजिरहेको हुन्थ्यो । मन्दिरमा प्रायः बूढाबूढीहरू बढी हुन्थे भने पारीपट्टि प्रायः युवा-युवतीहरूको भिड ज्यादा हुन्थ्यो ।

मन्दिरमा यदाकदा युवायुवतीहरू पनि देखिने गर्दथे । पारी महलमा यदाकदा बूढाबूढीहरू पनि देखिने गर्दथे । यता मन्दिरमा सधैं खिर, हलुवा जस्ता खानेकुराहरू पाक्दथे भने पारीपट्टि सधैं मासुका अनेकौं परिकारहरू पाक्दथे । यता मन्दिरमा पञ्चामृत बाँडिन्थ्यो उता रक्सी बाँडिन्थ्यो ।

दिनभरी यता मन्दिरमा पण्डित व्यस्त हुन्थे । साँझ परेपछि सबै भक्तजनहरू आ-आफ्ना घरतिर लाग्दथे । बेलुकी आठ बजेको आरती सकिएपछि त मन्दिर लगभग शुन्य र सूनसान हुन पुग्दथ्यो । पण्डित बेलुकीको खाना नौ बजेसम्म खाइसक्दथे र सुत्ने तरखर गर्दथे ।

उता महलमा पनि बढीमा नौ बजेसम्म रंगरस चल्दथ्यो । त्यसपछि कानुनी हिसावले पनि यस्ता होटलहरू र रमाइलो गर्ने घरहरू बन्द गर्नुपर्ने नियमले गर्दा नौ बजेसम्म बन्द भैसक्दथ्यो । सबै पाहुनाहरू आ-आफ्नो घर फर्किसकेका हुन्थे । नौ बजेसम्म त्यहाँ पनि सूनसान जस्तो हुन्थ्यो । वेश्या पनि दश बजेसम्म खाना खाइसकेर सुतिसकेकी हुन्थी ।

सुतिसकेपछि यता मन्दिरमा पण्डित दिनभरिका घटनाहरू बारे सोच्ने गर्दथे । यसरी सोच्दा सोच्दै पारीपट्टि वेश्याको महलमा भएका दिनभरिका रमाइलो रसरंगबारे पनि सोच्न पुग्दथे । जब त्यो वेश्या र त्यहाँको वातावरणको याद आउँथ्यो अनि उनलाई आफ्नो जीवन बेकार लाग्दथ्यो । जिन्दगी भनेको त त्यो पो हो । आहा कति रामाइलो त्यहाँ नाच, गान, रंग, रस हासो मजाक कति मजा छ त्यो जिन्दगी ! कति राम्री छे त्यो

वेश्या पनि । त्यसलाई एकपटक भोग गर्नपाए कस्तो आनन्द हुँदो हो । यहाँ त खाली बूढाबूढीहरू मात्रै आउछन् । सधैं त्यहि भजन किर्तन । सधैं त्यहि पञ्चामृत । त्यहि खीर, रोटी । विहान उठ सधैंको त्यहि पूजापाठ । प्रवचन । वाक्क लाग्दो जिन्दगी ।

पण्डितको मनमा यस्तै तर्कनाहरू आउँथ्यो । यस्तै चिन्तन गर्दागर्दै उनी निदाउँथे । सपनामा त्यो वेश्यासँग संभोग गर्दथे र ब्यूँझन्थे । यस्तो धेरै पटक हुने गर्दथ्यो । सपनाबाट ब्यूझेपछि सोच्थे कि "त्यससँग सपनामा संभोग गर्दा त यति आनन्द छ साँच्चै नै संभोग गर्न पाए कति आनन्द आउदो हो ?"

पण्डितलाई धेरै पटक लागेको थियो कि यस्तो मन्दिरको जिन्दगीमा कस्ता दिनमा फसिएछ । कस्तो दशा बिग्रिएर संस्कृत पढिएछ । अंग्रेजी पढेको भए म पनि कुनै कार्यालयमा जागीर खाँदो हुँ । जागीरबाट छुट्टी भएपछि त्यहि वेश्याकोमा आएर उसलाई चुम्बन गर्ने थिएँ । यस्तै कल्पनमा उनी मग्न हुने गर्दथे ।

उता पारीपट्टि वेश्या जब ओछ्यानमा सुत्न जान्थी तब उसको मनमा पनि आफ्नो महलमा दिनभरि घटेका घटनाहरू याद हुन थाल्थे । यस्तैमा पारीपट्टि मन्दिरमा भएका भजन किर्तन, पूजापाठ, प्रवचन आदि तर्फ उसको ध्यान जाने गर्दथ्यो । कस्तो भाग्यमानी रहेछ त्यो पण्डित । सधैं भगवान्को काम काम गर्न पाएको छ । मन्दिरमा बस्न पाएको छ । मेरो त यस्तो नरकको जस्तो जिन्दगी, हे भगवान् ! कस्तो अभागी रहेछु कस्ता दिनमा यस्तो काममा फस्न पुगेछु । हे भगवान् ! मलाई यस नरकबाट उद्धार गरिदेउ ।

वेश्याले प्रायः सपनामा पारी मन्दिरमा गएर भगवान्को पूजा पाठ गरेको हुन्थी । ब्यूँझिदा आफूलाई महलकै एउटा कोठामा पाउँदा दिक्दार हुन्थी । सपनामा झैं सधैं भगवान्को भजन

गाईरहन पाए । हाय ! मेरो जिन्दगी । उ यस्तै यस्तै सोच्ने गर्दथी ।

दिनभरी पनि उ बाहिर रसरागमा भुले जस्तो देखिए पनि उसको मन त्यहि मन्दिरको भगवान्‌तिर गइरहेको हुन्थ्यो ।

यता मन्दिरको पूजारी दिनभरी भगवान्‌को प्रवचन गरेको जस्तो देखिए पनि उसको मन पारी महलकी वेश्यातर्फ नै गइरहेको हुन्थ्यो ।

यसरी नै दिन वित्दै गए । पण्डित न त कहिल्यै वेश्याकोमा जान सक्यो, न त वेश्या मन्दिरमा आउन सकी । दुवै आ-आफ्नो काममा फसिसकेका थिए । दुवैले आफ्नो काम छोड्न सकेनन् ।

बूढो भएर पण्डित मर्‍यो । संजोगको कुरा पण्डित मरेको केही बेरमै वेश्या पनि मरी ।

पण्डितलाई लिन नरकबाट यमराजका दुतहरू आए । मन्दिरका सबै भक्तहरू दंग परे । यमदुतहरू मन्दिरको पण्डितलाई लिन आउँदा सबै छक्क परे । मन्दिरका भक्तहरूले नदीपारी हेर्छन् त वेश्यालाई लिन स्वर्गदुतहरू आएका छन् । वेश्याको महलमा आएका मानिसहरू पनि दंग परेका थिए । यस्ती पापिनीलाई स्वर्ग पो लैजान लागे भनेर धेरै दंग परिरहेका थिए । यता मन्दिरका भक्तहरूलाई लाग्यो यमदुतहरू र स्वर्गदुतहरू झुक्किएका होलान् । त्यसैले उनीहरूले पण्डितलाई लिन आएका यमदुतहरूसँग भने- "हे यमदुतहरू हो ! तपाई कतै झुक्किनु भएको हो कि ! तपाईहरू सायद पारीपट्टिको वेश्यालाई लिन आउनु भएको होला ।"

यमदुतहरूले भने- "हे भक्तहरू हो ! हामीबाट कहिल्यै भुलचुक हुँदैन । हामी कहिल्यै झुक्किदैनौं । हामीले जे गर्नुपर्ने हो त्यहि गरिरहेका छौं ।"

भक्तहरूले भने- "हे यमदुतहरू हो ! हामीले कुरा बुझ्न सकेनौं । जिन्दगीभरी धर्मकर्म, पूजापाठ, प्रवचन गर्ने गरेका यस्ता धर्मात्मा पण्डितलाई तपाईहरू नरकतिर लैजादै हुनुहुन्छ । उता जीवनमा वेश्यावृति गर्ने पापिनी वेश्यालाई स्वर्ग लान भनी स्वर्गदुतहरू आइरहेका छन् । यो त अन्याय भएन र?"

यमदुतहरूले भने- "हे भक्तहरू हो ! तपाईहरू मानिसहरूको बाहिरी आवरणलाई मात्रै देख्नुहुन्छ, तर हामी मानिसहरूको भित्री मनलाई पनि देख्दछौं ।"

भक्तहरूले कुरो नबुझ्केको देखेर यमदुतहरूले फेरि भने- "हेर्नुहोस् तपाईहरूको नियत जतिसुकै राम्रो भए पनि दुनियाँ तपाईहरूको देखावटी आवरणबाट तपाईहरूलाई चिन्दछन् भने तपाईंको देखावटी जतिसुकै राम्रो भए पनि भगवान् तपाईंलाई तपाईंको नियतबाट चिन्दछन् ।"

सारांशमा भन्नुपर्दा भगवांन् तपाईंको नियतअनुसार तपाईंको मूल्याङ्कन गर्छन् । मान्छेहरू तपाईंको देखावटीलाई हेरेर तपाईंको मूल्यांकन गर्छन् ।"

भक्तहरूले अझै कुरो बुझ्केनन् । त्यसपछि यमदुतहरूले स्पष्ट पार्दै भने- "वेश्याले दिनभरी खराब काम गरे पनि उ आफ्नो कामबाट खुशी पुकार गर्थी । त्यसकै फलले उ स्वर्ग गएकी हो । यता पण्डित ती सबै खराब कामहरू गर्दथ्यो जो वेश्याले दिउँसो गर्दथी । उसको मनको खराब कामको फलस्वरूप उ नर्क जाँदैछ ।

बल्ल भक्तहरूले रहस्य बुझ्के ।



# भाग्य फुटेको व्यक्तिको बुद्धि हुँदैन

एक पटक शिव र पार्वती भेष बदलेर पृथ्वीलोकमा घुम्न आएछन् । घुम्ने क्रममा एउटा गाउँमा पुगेछन् । त्यो गाउँमा पार्वतीले दुई बूढाबूढीलाई अत्यन्तै गरिबी र दरिद्रतामा जीवन बिताइरहेको देखिन । ती बृद्धबृद्धालाई देखेर पार्वतीलाई तिनीहरू प्रति दया पलाएछ । उनले तिनीहरूको उद्धार गर्ने विचार गरिन् ।

ती दुःखी पीडित र असहाय बृद्धबृद्धालाई सहयोग गर्ने विचारले पार्वतीले शिवसँग भनिन्– "हे स्वामी ! मलाई यी बृद्ध दम्पतीको पिडा देखेर यिनीहरूप्रति मेरो मनमा दया आएको छ । यिनीहरूको उद्धार गर्न पाए हुनेथियो ।"

शिवले भन्नुभयो– "हे पार्वती ! हुनेहार दैव नटार भन्ने उखान नै छ । विधिको विधानलाई कसैले मेट्न सक्तैन तैपनि तिमीलाई उनीहरूलाई केही गर्छु भन्ने लाग्छ भने तिमी उनीहरूलाई केही दिएर आउ । तर म भनिदिनेछु कि तिमीले जति दिए पनि उनीहरूले त्यसको दुरूपयोग गर्नेछन् । उनीहरूको बुद्धि नै त्यस्तो छ ।"

पार्वतीले उनीहरूलाई केही दिने विचार गरिन् । के दिने त भनेर सोच्दा उनले तीनवटा साना भकुण्डा दिने निर्णय गरिन् । उनले तीनवटा मनचिन्ते भकुण्डाका डल्ला लगेर ती बूढाबूढीलाई दिँदै भनिन्– " हे बृद्ध दम्पती ! तपाईहरूको यो दुःख देखेर तपाइहरूप्रति दया लाग्यो र तपाईहरूको उद्धार गरूँ भनि म आएको छु । यी तीनवटा भकुण्डा लिनुहोस् । यी डल्ला तपाईले जे चाहना राखेर फाल्नुहुन्छ त्यहि पाउनुहुनेछ । एकपटक त्यो डल्ला फालेपछि डल्ला बिलाउने छ र जे मागेको हो त्यहि पाइनेछ ।

यति भनेर शिव पार्वती त्यहाँबाट बिदा भएर गए । शिव पार्वती गएपछि ती बूढाबूढीले छलफल गर्न थाले । मागेर फ्याक्ने भन्ने विषयमा छलफल गर्ने क्रममा बूढाले भने- "ल बूढि हाम्रो घर छैन । एउटा डल्ला चाहिं घर मागेर फालौं । यस्तो झुप्रामा कति बस्नु?"

बूढिले भनी- "हामी बूढाबूढी भयौं, घर मागेर के गर्ने? छोरा मागौं । हाम्रो छोराछोरी भएनन् । पहिला एउटा छोरा मागौं त्यसपछि घर मागौंला ।"

बूढाले घर माग्ने, बूढीले छोरा माग्ने भन्ने कुरामा विवाद हुँदा तिनीहरूबीच झगडा हुन थाल्यो । रिसको झोंकमा बूढाले उसित भन्यो- "तँलाई सौता मागेर फाल्छु ।" यति भन्दै उसले एउटा डल्ला फाल्यो- "सौता आइजा ।"

त्यसै बेला एउटा बूढी आइमाई त्यो झुपडिमा देखा परी । अब त दुइटी श्रीमती झगडा पो गर्न थाले । एउटा भकुण्डो त बिलाइ हाल्यो । अब दुईवटा झकुण्डो बाँकी छ । अब के मागेर फाल्ने भन्ने विषयमा तीनजना बीचमा छलफल हुन लाग्यो ।

नयाँ आएकी बूढी श्रीमतीले भनी- "हाम्रो खेत छैन खेत मागौं ।" पहिलेकी बूढीले भनी- "छोरा मागौं ।" बूढोको इच्छा माग्ने छँदै थियो । यी तीनजना बीच कुरा मिलेन । फेरि झगडा हुन थाल्यो । बूढोले सोच्यो यी दुइटी बूढी भएर झन तनाव पो भयो । दुईजना बूढी झगडा गर्न लागे । हात हालाहाल गर्न लागे । नयाँ आएकी बूढीलाई धपाउन पर्छ भन्ने उसले सोच्यो ।

बूढोले रीसको झोकमा दोस्रो डल्लो- "बूढी जा ।" भन्दै फ्याक्यो ।

उसले चाहेको थियो नयाँ आएकी बूढी जावस् । तर उसले बढी जा भनेर फाल्छ दुइटै बूढी गए ।

अब बेलुकीपख खाना पकाउनुपर्ने बूढी त छैन । बूढोलाई बूढीको खाँचो पर्न थाल्यो । एउटै मात्र डल्लो बाँकी थियो । उसले त्यो डल्लो- "ल मेरी बूढी आओस् ।" भन्दै फ्याक्यो ।

उसकी बूढी फिर्ता आइ । अब उसको हातमा एउटै डल्लो बाँकी थिएन । तीनवटै डल्ला सकिएका थिए । त्यसैले उसकी बूढीले अब छोरो पाउने भन्दै ढिपी गर्ने कुरै भएन ।

उनीहरू पहिलेकै अवस्थामा भए । एउटा ठूलो मौका आएको थियो । उनीहरू त्यो मौकाको उपयोग गरेर आफ्नो गरिवी र दुःखबाट छुटकारा पाउन सक्थे तर उनीहरूले त्यसको उपयोग गर्न सकेनन् ।

यो सबै दृश्य कैलाश पर्वतबाट हेरिरहेका शिवले पार्वतीसँग हाँस्दै भने- "देख्यौ पार्वती ! मैले भनेकै थिए नी ! उनीहरूको सुख पाउने भाग्य नै छैन । भाग्य फुटेपछि बुद्धि पनि उल्टो हुन्छ ।"



# गणेशको पूजा किन पहिले?

भगवान् गणेश बुद्धि र विवेकका देवता हुन् । उनको बुद्धि र चातुर्यताको प्रमाण एउटा घटनामा देखिन्छ ।

एकपटक देवताहरूबीच एउटा समस्या पैदा भयो । पूजा गर्दा कुन देवताको पूजा पहिले गर्नु? भन्ने समस्या थियो । सबै देवता आफ्नो पूजा पहिला हुनुपर्ने दावा गर्दथे । सबैले आ-आफ्नो महत्त्व देखाउन थाले । सबैले आ-आफ्नो ढिपी नछाडेपछि निर्णय गर्न कठिन भयो । भगवान् शिवलाई यसको निर्णय गर्न लगाउने उद्देश्यले सबै देवताहरू कैलाश पर्वतमा गए ।

भगवान् शिवले सबै देवताहरू आउनुको कारण बुझेपछि उनले भने- "ठिक छ म निर्णय गरिदिन्छु । तर तपाईंहरू कसको पूजा पहिले भनेर मैले तोकिदिंदा जसलाई तोकिदिन्छ, उ त खुशी होला तर अरू बेखुशी हुनेछन् र मैले पक्षपात गरेको आरोप लाग्न सक्छ । त्यसैले म एउटा परीक्षा लिन्छु । त्यहि परीक्षाबाट नै यस कुराको निर्णय लिन्छु । तपाईंहरू यस पृथ्वीको परिक्रम गर्न जानुहोस् । जसले परिक्रमा गरेर मकहाँ सबभन्दा पहिले आइपुग्छ उसैको पूजा पहिले हुन्छ ।"

भगवान् शिवबाट यति सूनने बित्तिकै सबै देवताहरू कुदन थाले । छिटो हिड्ने वाहन भएकाहरू आ-आफ्नो वाहनमा चढेर वाहनलाई तेजसँग दौडाउन थाले ।

बिचरा गणेश भने दु:खी भए । यस्तो परीक्षा राखेर भगवान् शिवले आफूमाथि अन्याय गरेको सम्झे । किनभने उनको वाहन मुसो थियो । मुसो छिटो हिंड्न सक्तैन । मुसो माथि चढेर पृथ्वीको परिक्रमा गर्न त वर्षौं लाग्ने थियो । अब मेरो पूजा

पहिले हुने भएन । यो मेरो भाग्यमा लेखेको रहेनछ भन्ने ठानेर गणेशजी चुपचाप बसे ।

यतिकैमा उनको मनमा एउटा जुक्ति आयो । यो जुक्ति फुरेपछि उनी प्रसन्न मन गरेर आफ्नी माताकहाँ गएर भन्न थाले– "हे माता ! हजुर पिताको छेउमा गएर बसिदिनुहोस् ।"

पार्वतीले सोधिन्– "किन र? तिमी किन पृथ्वीको परिक्रमा गर्न नगएको ?"

गणेशले भने– "हे माता ! पृथ्वीको के कुरा म त पूरै ब्रह्माण्डको परिक्रम गर्न खोज्दैछु । तपाईं पिताको छेउमा गएर बसिदिनुहोस् ।"

पार्वतीले आफ्नो छोराको आशय बुझिहालिन् उनी शिवको नजिकै गएर बसिदिइन् । गणेशले आफ्ना माता–पितालाई तीन पटक परिक्रमा गरे । तीनपटक परिक्रमा गरिसकेर माता पितालाई दण्डवत गरी छेउमै बसीरहे ।

पृथ्वी परिक्रमा सकेर तछाडमछाड गर्दै देवताहरू पनि आइपुगे । सबैभन्दा पहिला गणेशकै भाइ कुमार आइपुगे । आफ्नो वाहन मयुरमाथि चढ्दै अरू भन्दा पहिला आइपुगे ।

गणेशलाई त्यहिँ बसिरहेको देखेर कुमारले सोधे– "दाई ! तपाईं पृथ्वीको परिक्रमा गर्न जानुभएन? पहिलेदेखि नै हार्छु भन्ने लागेर यहि बसिरहनुभयो?"

गणेशले जवाफ दिए– "हे भाइ ! मैले पृथ्वीको मात्र होइन मैले त पूरै ब्रह्माण्डको परिक्रमा गरिसके त्यो पनि एकपटक मात्र होइन तीन पटकसम्म ।"

दाजु गणेशजीको यस्तो जवाफ सूनेर कुमारलाई आश्चर्य लाग्यो । अरू देवताहरू पनि छक्क परे । सबैले एउटै आवाजमा भने– "हामीले तपाईंलाई बाटोमा कतै पनि भेटेनौं । तपाईं

पृथ्वीको परिक्रमा गर्न जानुभएकै छैन । यस्तो झुट पनि बोल्ने ?"



गणेशजीले भन्नुभयो- "हे देवताहरू ! मैले झुट बोलेको छैन । शिव पार्वती यस सारा ब्रह्माण्डको केन्द्रबिन्दु हुनुहुन्छ । उहाँहरू भित्रै सम्पूर्ण ब्रह्माण्ड अटाएको छ । त्यसैले मैले उहाँहरूकै परिक्रमा गरेको हुँ । शास्त्रमा आफ्ना आमाबाबुलाई पृथ्वी र आकाश मानेको छ । आमालाई पृथ्वीसँग तुलना

गरिएको छ । मैले आफ्नी मातालाई परिक्रमा गरेर पृथ्वीको परिक्रमा गरिन्छत?"

गणेशजीको कुरा सूनेर सबै देवता नाजवाफ भए । गणेशजीको कुरा काट्न कसैले सकेनन् । गणेशजीले कस्तो चातुर्यता देखाए भनेर कुमार पनि दंग परे ।

भगवान् शिवले भन्नुभयो- "देवताहरू हो । तिमीहरूले सुनिहाल्यौ । गणेशले बुद्धि र विवेक पुऱ्याएर हाम्रो परिक्रमा गरे । तिमीहरू भन्दा पहिला यहाँ आइपुगे । अब उनैको पूजा पहिला हुनेछ ।"

सबै देवताहरूले ताली बजाएर शिव भगवान्ले गर्नुभएको निर्णय र फैसलालाई स्वीकार गरे ।

शिवले फेरि भन्नुभयो- "गणेशजीको पूजा पहिला हुनुमा मानिसहरूका लागि लाभ पनि छ । गणेश बुद्धि र विवेकका देवता हुन् । यसका साथै उनी विघ्नहर्ता पनि हुन् । यज्ञहरूमा यहि उनको पूजा पहिले गरिदिएमा उनको यज्ञमा बिघ्नबाधाहरू लाई पन्छाइदिनेछन् र यज्ञ र पूजाका कार्यक्रम सम्पन्न हुनेछन् ।"

आजभोलि जुनसुकै कार्यक्रम गर्दा पनि श्रीगणेशाय नमः ।" भनेर गणेशजीलाई पूजा गरेर वा उनलाई सम्झेर गर्ने गरिन्छ । यसरी उनलाई सम्झेर कुनै कार्य गरेमा त्यो कार्य सम्पन्न पनि हुन्छ । बिघ्न बाधा हट्नेछन् ।

यस पुस्तकको शुरूको पेजमा सबैभन्दा माथि सानो अक्षरमा श्री गणेशाय नमः लेख्नुको कारण पनि यहि हो । यो पुस्तक लेख्ने कार्य शीघ्र सम्पन्न होस् ।

कार्यसिद्धि गणेशलाई नमस्कार ।



# समुन्द्र मन्थन र लसूनको कथा

लसून मसलाको रूपमा प्रयोग हुने खाद्यवस्तु हो । यो बहुगुणकारी, बहुउपयोगी र मानव शरीरको लागि लाभदायक छ । यसको सेवनले धेरै किसिमका रोगहरू निको पार्न र रोग लाग्न नदिने सम्मको काम गर्छ ।

पहिलेका बाहुनहरूले लसूनको प्रयोग गर्दैनथे । बाहुनहरू लसून, गोलभेडा, प्याज जस्ता खाद्यवस्तुलाई अशुद्ध भन्ने गर्दथे । प्याज र गोलभेडालाई अशुद्ध मान्नुको कारण त के छ कुन्नि । लसूनलाई अशुद्ध मान्नुका पछाडि एउटा कथा छ ।

जब देवता र राक्षसहरू मिलेर समुन्द्र मन्थन गरे त्यसबेला विष उत्पन्न भयो । त्यो हलाहल विषलाई भगवान् शिवले खाइदिनुभयो । त्यसलाई मुखमा राखिरहन पनि सक्नुभएन । निलेर पेटमा पुऱ्याउन पनि सक्नुभएंन । निलेर पेटमा पुऱ्याएमा त्यसले शिवको मृत्यु गराउने भयो । निलौं मृत्यु हुन्छ । ननिलौं मुखमा राखेर बोल्न पनि मिल्दैन कतिञ्जेल मुखमा राख्नु? मुखमा राखिरहँदा विषले मुख नै जलाइदिन्छ ।

प्रश्न उठ्न सक्छ । त्यो विषलाई खानुपर्ने के परेछ? त्यसलाई फालिदिए पनि हुनेथियो नि? तर त्यसो होइन । थोरै विष निस्केको भए हुन्थ्यो । थुप्रै विष उत्पन्न भएको थियो । त्यो विष धर्तिमा खस्न दिएको भए पृथ्वीलाई नै ध्वस्त गरिदिन्थ्यो । सबै देवताहरू त्यो विषसँग डराएर भागाभाग गर्न थालेका थिए । त्यो खतरनाक विष थियो । जसरी कुनै बेलाको विशालकाय जीव डायनोसरको अन्त्य सानो रूप छेपारो भनिन्छ । कुनै समय डाइनोसर यस पृथ्वीको सबैभन्दा ठूलो जीव थियो । एउटा डायनोसरको पेटमा कैयौं हात्तीहरू अट्ने गर्दथे । त्यस्तो विशाल जीव कस्तो आकारको थियो भन्दा आजभोलिको भितामा हिंड्ने

सानो छेपारोलाई देखाइन्छ । डाइनोसर छेपारो जस्तै थियो तर विशाल थियो । घिस्रेर हिंड्थ्यो छेपारो जस्तै । तर छेपारोले घिस्रेर पुग्न एकदिन लाग्ने ठाउँ त डाइनोसरले एकै पाइलामा पुग्दथ्यो ।

ठिक त्यसरी नै त्यसबेला समुन्द्र मन्थन गर्दा निस्केको विष र आजभोलि बोटविरूवामा पाइने विषमा डाइनोसर र छेपारोको जत्तिकै फरक छ । विष भन्नेवितिकै हामी आजाभोलिको थोरै विषयको मात्रालाई बुस्दछौं । तर समुन्द्र मन्थन विषको ठूलो पहाड नै उत्पत्ति भएको थियो ।

सबै देवता र राक्षसहरू विषसँग तर्सेर भागाभाग गर्दै थिए । सबैले शिव भगवान्सँग गुहार मागे । शिवलाई पनि देवताहरूप्रति दया आयो र विषबाट पृथ्वी, आकाश, चन्द्रमा, सूर्य, स्वर्ग देवता सबैलाई बचाउनका लागि विष पिइदिनुभयो ।

विषको बडेमानको थुप्रो देखेर शिवले पनि आफ्नो सानो आकारको शरीरलाई फैलाएर विषको थुप्रो भन्दा विशाल बनाउनु भयो । सबै विष मुखमा हाल्नुभयो । पेटमा पुऱ्याउन पनि सक्नु भएन । ओकल्न त झन हुँदै हुँदैनथ्यो । त्यो विष आजभोलिको एटम बम भन्दा खतरनाक थियो ।

शिवले नयाँ उपाय लगाउनु भयो । विषलाई आफ्नो घाँटीमा राखेर त्यहि पचाइ दिनुभयो । विषलाई घाटीमा राखेको हुनाले विषले उहाँको घाँटी नै जलाएर निलो बनाइदियो । त्यसैले शिव भगवान्को घाँटी निलो देखिएको हो । घाँटी निलो भएकोले उहाँलाई त्यसैबेलादेखि निलकण्ठ पनि भन्न थालियो ।

समुन्द्र मन्थन फेरि सुरू भयो । मदानीको एउटा डोरी राक्षसहरूले समाते । अर्को डोरी देवताहरूले समातेर समुन्द्रलाई धाई धुरे पार्न थाले । अब भने त्यहाँबाट अमृत उत्पन्न भयो ।



विष उप्तन्न हुँदा सबै विषबाट तर्किए तर अमृत पैदा भएपछि भने सबैजना त्यो अमृत आफ्नो कब्जामा पार्न हारालुछ गर्न थाले । देवता र राक्षसहरूबीच तँछाडमछाड भयो । तर बाठा चतुर भगवान् विषणुले राक्षसहरूलाई अल्मल्याएर भुक्याएर त्यो अमृत देवताहरूलाई बाँडीदिनुभयो ।

अमृत पिएर देवताहरू कहिल्यै नमर्ने अमर बने । देवताहरू कहिल्यै नमर्ने भए ।

देवताहरूले अमृत पिइरहेको बेला एउटा पंक्षी कागले पनि आफू अमृत पिउन पाए अमर हुने थिए भन्ने सोचेर देवताहरूबाट अमृत फुत्काउने दाउ गर्न थाल्यो । नभन्दै एउटा मौकामा उसले त्यो अमृतको एउटा कचौरा आफ्नो चुच्चोमा च्यापेर उड्न थाल्यो ।

कौवाको यस्तो हर्कत देखेर देवताहरू कागलाई लखेट्दै कागकोपछि दौडिए । काग आत्तिएर का का भनेर कराउन थाल्यो । उ कराउन लाग्दा कचौरा फुत्कियो र तल पृथ्वीमा खस्यो ।

कचौरा पृथ्वीमा खस्ता कचौराबाट अमृतको दुईचार थोपा धर्तिमा खसेछ । त्यो थोपा यस्तो ठाउँमा खस्न पुगेछ जहाँ मानिसहरूले दिनहुँ दिशा गर्ने रहेछन् । चर्पिमा खस्न पुगेछ ।

देवताहरूले कचौरा टिपेर लगिहाले । तर चर्पिमा खसेको अमृतको थोपा विस्तारै उम्रन थालेछ ।पछि त्यो हुर्कंदै ठूलो भएछ । मानिसहरूले पृथ्वीमा यो अनौठो नयाँ वनस्पति देखेर यो के रहेछ भनेर सुँघ्दाखेरि अल्ली नमिठो कडा गन्ध पाएछन् यसको के उपयोग रहेछ भनेर प्रयोग गर्दा त त्यसले धेरै किसिमका रोगहरू निको पार्दोरहेछ भन्ने पत्ता लगाए । यसरी बहुउपयोगी र बहुगुणी बनस्पति देखेर त्यसलाई जोगाएर राख्न थाले । त्यसको बिउ हुर्काएर खेती गर्न थाले । यस्तो बहु गुणकारी बनस्पतिको नमिठो गन्ध किन आएको होला भनेर खोजी गर्दा थाहा भयो कि यो त चर्पिमा उम्रेको रहेछ । त्यहि चर्पिको गन्ध बोकेर पो यो उम्रेको रहेछ ।

यसरी चर्पिमा उम्रेको हुनाले बाहुनहरूले अशुद्ध मानेर यसको प्रयोग गर्न छाडिदिए । तर अरू मानिसहरूले यो स्वर्गबाट खसेको अमृतकै टुक्रा ठानेर यसको धेरै लाभ देखेर प्रयोग गर्न थाले ।

हुन पनि लसून अमृत बराबर नै छ । यसलाई तिरका पुऱ्याएर खाने हो भने, नियमित रूपले सेवन गर्नाले यसले धेरै रोगहरूबाट बचाउन साँच्चै नै बचाउँछ । साँच्चै नै यसले मानिसलाई दीर्घायु बनाउँछ । अमर त नबनाउँला तर दीर्घायु बनाउँछ बनाउँछ ।



# आइमाई शास्त्र

धेरै पहिलेको कुरा हो । नेपालको एउटा कुनै गाउँबाट एकजना युवक अध्ययन गर्ने भनेर बनारसमा गएछ । त्यहाँ एउटा गुरूकुलमा बसेर उसले अध्ययन शुरू गऱ्यो । उ अत्यन्तै मेधावी थियो । इमान्दार र लगनशील पनि थियो । गुरूहरूको सेवा सत्कार गर्दै उसले मन लगाएर अध्ययन गऱ्यो ।

पढाइप्रतिको उसको तिव्र रूचि र मिहीनेत देखेर सबै गुरूहरू उदेखि प्रसन्न थिए । उसको स्मरण शक्ति पनि अद्भुत थियो । अरू विद्यार्थीहरूले कैयौं दिनसम्म कोशिश गर्दा पनि कण्ठ पार्न नसकेको पाठ उ एक दुई दिनमै कण्ठाग्र पार्न सक्दथ्यो । उ छिटै कुरा बुझ्दथ्यो । गुरूहरूले अरू विद्यार्थीहरू लाई कैयौं पटक भन्दा पनि बुझ्दैनथे । कुनै विद्यार्थीलाई त जति सम्झाउँदा पनि हुँदैनथ्यो । कुरै बुझ्दैनथ्यो । तर त्यो युवकलाई एकपटक या बढीमा तीनपटक भनेपछि पुग्दथ्यो ।

अरू विद्यार्थीहरूले सत्र अठार वर्ष लगाए पनि पूरा गर्न नसक्ने कोर्ष त्यस युवकले बाह्र वर्षभित्रै पूरा गरिदियो । यस बाह्र वर्षमा उसले चार वेद, अठार पूराण, ज्योतिष, कर्मकाण्ड, उपनिषद, गीता, महाभारत, रामायण आदि सारा धर्मग्रन्थ संहिताको विषयमा पारंगत भयो । उसको यस्तो प्रतिभा देखेर गुरूहरू पनि छक्क परे ।

उसले सबै पढाइ पूरा गरेपछि उसलाई गुरूहरूले दीक्षा पनि दिए । दीक्षा दिएपछि गुरूहरूले उसलाई त्यहि गुरूकुलमै बसेर शिक्षकको रूपमा रहन प्रस्ताव राखेका थिए । तर उसले आफ्नै गाउँ फर्केर आफ्नै जन्मभूमिको सेवामा जुट्ने विचार गऱ्यो । गाउँमै पाठशाला खोलेर गाउँको सेवामा जुट्ने विचार गऱ्यो ।

यसको विचार सहि पनि थियो । गुरूहरूले उसलाई आशीर्वाद दिँदै त्यहाँबाट बिदाइ गरे ।

उ गुरूकुलबाट सबै गुरूहरू र आफ्ना सहपाठी विद्यार्थीहरू, अरू नयाँ विद्यार्थीहरू सबैसँग विदा भएर आफ्नो गाउँतर्फ प्रस्थान गऱ्यो ।

बनारसबाट गाउँसम्म पुग्न धेरै दिन लाग्दथ्यो । हिजोआज जस्तो यातायातको सुविधा त्यसबेला थिएन । पैदल यात्रा गर्नु पर्दथ्यो । डाँडा-पाखा, वन-जंगल, नदी-नाला, पर्वत सब थिचोल्दै कैयौं दिनको कठिन यात्रापछि उ बल्ल आफ्नो गाउँ पुग्न अब करिब एकदिन लाग्ने ठाउँसम्म आइपुग्यो । त्यहाँ एउटा ठूलो चौर थियो । बाटोको छेउको चौतारोमा बसेर एकछिन थकाइ मार्न बस्यो उ ।

बेलुकी पखको समय थियो । सूर्य अब अस्ताउनै लागेका थिए । पारी हिमालमा सूनले पोते जस्तै गरी हिमाल पहेंलो देखिएको थियो । साँझको सूर्यको मधुरो प्रकाशले हिमाललाई सून जस्तै देखाइदिएको थियो । यस्तो लाग्थ्यो एउटा सूनको ठूलो थुप्रो या सूनको पर्वत पो हो कि जस्तो भान हुन्थ्यो । गोठालाहरू आ-आफ्ना वस्तुभाउहरू धपाउँदै घरतिर लाग्दै थिए ।

चौतारामा सुस्ताउँदै उसले विचार गऱ्यो- "रात पर्न अझै दुई तीन घण्टा बाँकी छ । यो दुई तीन घण्टा हिंडे भने त म धेरै पर पुगिहाल्छु । आज अलिकति बाटो काट्न पाए भोलिलाई सजिलो हुने थियो । भोलि त यतिखेरसम्म म घर पुगिसक्ने थिएँ ।"

उसले फेरि सोच्यो- "दुई तीन घण्टा समय छ, तर दुई तीन घण्टा हिंडेर गएपछि रात पर्दा बास बस्ने ठाउँ छ कि छैन । यदि बास बस्ने ठाउँ रहनेछ भने त अप्ठेरो पो पर्छ । जंगलमा बास भयो भने त बाध भालु चितुवाको डर हुन्छ ।

जंगलको बास हुनुभन्दा बरू यहि नजिकैको गाउँमा बास बस्दा राम्रो हुन्छ ।"

अब दुई तीन घण्टा हिंडेपछि कुनै गाउँ आउँछ कि आउँदैन भन्ने बारे उसलाई कन्फ्युज भयो । बाह्र वर्ष अगाडि हिंडेको थियो । यो बाटोमा यस बाह्र वर्षमा धेरै ठाउँमा परिवर्तन भइसकेको रहेछ । पहिले गाउँ भएको ठाउँमा अहिले सूनसान भएको देख्यो । ती गाउँहरू मध्य कुनैबेला पहिरोले पुरेछ । कुनै गाउँमा खोलो पसेर गाउँ नै बगर पारिदिएछ । गाउँलेहरू त्यहाँबाट बसाइँ सरेर अन्यत्रै गएछन् । बाह्र वर्ष अगाडि गाउँ नै नभएका सूनसान ठाउँमा अहिले आउँदा सानो बजार नै भइसकेको पनि उसले पायो ।

यस्तो परिवर्तन देख्दा उसलाई अन्यौल भयो । कति ठाउँहरू त उसले बिर्सिसकेको पनि थियो । बाह्र वर्ष अगाडिको कुरा सम्झिरहने कुरा पनि भएन ।

उ यस्तै सोच्दै दोधार मन गरेर बसिरहेको थियो । अगाडि बढौं या यहि गाउँमा बास बसौं भन्ने निर्णय गर्न सकिरहेको थिएन ।

उसले सोच्यो आज अलिकति अरू बाटो काट्न पाएँ भने त भोलि यतिखेर घर पुगिसक्नेछु । त्यसैबेला उसको छेउबाटै एउटी युवती डोकोमा पानी बोकेर गइरहेकी थिई । ती युवती लाई देख्दा उसलाई आफ्नी श्रीमतीको याद आउन थाल्यो ।

भोलि यतिखेरसम्म त आफ्नी श्रीमतीलाई भेट्न पुग्नेछु । यस्तो विचार मनमा आउने वितिकै उसको मन प्रसन्न भयो । उसको अनुहार उज्यालो भयो । उसले थकाइ बिर्सियो । यसको शरीरमा नयाँ फूर्ति आयो ।

आफ्नी श्रीमतीलाई सम्झने बित्तिकै उसको शरीरमा जोश जाँगर आयो । फूर्ति आयो । उमंग आयो । उसले अगाडि बढ्ने नै निधो गरेर उठ्यो । हिंड्न सुरु गऱ्यो ।

आधिं घण्टा हिंडेपछि उसले एउटा धर्मशाला र चौतारो भेट्यो । त्यो धर्मशाला र चौतारो देखेपछि उसलाई याद आउन थाल्यो कि यसभन्दा अगाडि अब अर्को गाउँ छैन । बाटोमा घना जंगल छ । अब आजको लागि यहिं विश्राम गर्नु उपयुक्त हुनेछ ।

उसले धर्मशाला नजिकैको धाराबाट पानी पियो । झोलाबाट रूमाल झिकेर पसिना पुछ्यो । खुट्टाहरू दुखेका थिए । आफ्नै हातले एकछिन खुट्टा मिच्यो । मनमनै सोच्न थाल्यो– "भोलि त श्रीमतीले खुट्टा मिचिदिन्छे । तेल घसिदिन्छे । त्यसपछि सञ्चो भइहाल्नेछ ।"

श्रीमतीको ख्याल आउने बित्तिकै उसलाई हिंड्न मन लाग्यो । साँझ अझै एक दुई घण्टा बाकी छ । अहिल्यै बास बसेर के गर्ने? यसले यस्तै सोच्यो । फेरि सम्झन थाल्यो– जंगलमा बास बसेर बाघको आहारा हुनुभन्दा यहिं ठिक छ ।

यतिञ्जेल सूर्य डुबिसकेका थिए । आ–आफ्नो गुडतिर फर्किरहेका चराहरूको आवाजले त्यहाँको सूनसान वातावरणलाई भंग गरिरहेको थियो । केही गोठालाहरू अझै आफ्ना गाईवस्तुहरू धपाइरहेका थिए । परबाट एउटी सुन्दरी युवती पनि आफ्ना गाईहरू धपाउँदै उतर्फ आइरहेको देख्यो ।

त्यो युवतीलाई देखेर उसलाई आफ्नी पत्नीको फेरि ख्याल आयो । बाह्र वर्ष अगाडि उसरी पत्नी पनि ठ्याक्कै यहि युवती जस्तै थिई । सायद यो भन्दा अल्ली कान्छी थिई । मोरी कति राम्री थिई । स्वर्गकी अप्सरा जस्तै ।

उसले बाह्र वर्ष अगाडिका ती दिनहरू सम्झन थाल्यो । त्यसबेलाको चलनअनुसार उसले सानै उमेरमा बिहे गरेको थियो । उ अठार वर्षको थियो र उसकी पत्नी सत्र वर्षकी । बिहेपछि लगभग दुईवर्ष उसले श्रीमतीसँग विताएको थियो । त्यसबेलासम्म उसले गाउँमै आफ्नै हजुरवाले चलाएको पाठशालामा पढेको थियो । बाँकी पढाइ पूरा गर्न भनेर बीस वर्षको उमेरमा उसले घर छोडेर वनारस आएको थियो ।

उसले संझन थाल्यो । उ हिड्ने बेलामा उसकी श्रीमती खुशी भएरूर रोएकी थिई । ओहो ! मलाई कति माया गर्थी । अत्यन्तै असल थिइ उसरी श्रीमती । आमा, वुवा सबै खुशी थिए उबाट । आमा भन्नुहुन्थ्यो— "साह्रै असल छे तेरी स्वास्नी ।" भाउजुहरू पनि हाम्रो देवरले साह्रै सज्जन र राम्री श्रीमती पाउनुभयो भन्थे । ठूली फुपूले हाम्रो भदाहा भाग्यमानी रहेछ राम्री श्रीमती पायो भनेको उसलाई हिजै जस्तो लाग्यो ।

श्रीमतीका यस्ता कुरा सम्झँदा उसलाई घर जान हतार लागेर आउँथ्यो । उसको मन बेचैन हुन्थ्यो । अहिल्यै हिंडीहाल्न पाए हुन्थ्यो जस्तो छटपटी भयो ।

त्यो युवती आफ्ना गाईहरू धपाउँदै उसैको अगाडि आइपुगी । उसलाई नजिकै देखेर युवकले सोध्यो— "बहिनी ! यहाँबाट अर्को गाउँ कति टाढा पर्छ होला?"

युवतीले भनी- "हे युवक ! पहिले त तपाईंले मलाई गलत संवोधन गर्नुभयो । म तपाईंकी बहिनी कसरी हुन सक्छु? म तपाईंको लागि बाटोमा भेटिएकी कुनै युवती हुनसक्छु जसरी तपाई युवक हो मेरा लागि । त्यसैले सही संवोधन गर्नुहोस् र सोध्नुहोस् ।"

युवतीको यस्तो जवाफ सूनेर युवक दंग पर्‍यो । उसले भन्यो- "तपाईंलाई बहिनी भनेर संवोधन गरेर मैले तपाईंको इज्जत गराको हुँ ।"

"छोडिदिनुहोस् इज्जत सिज्जतका कुरा" युवतीले भनिन् ।- "कसैलाई गलत संवोधन गरेर उसको कसरी इज्जत हुन्छ? इज्जत त सहि सम्बोधन गरेर पो हुन्छ ।"

"हाम्रो हिन्दू शास्त्रले सबै नारीलाई दिदी बहिनी, या माताको रूपमा व्यवहार गर्नु भन्ने निर्देशन दिएको छ ।" युवकले आफूले अध्ययन गरेको शास्त्रलाई आधार बनाउँदै भन्यो- "परस्त्रीलाई दिदी बहिनी समान देख्नु त राम्रो सम्भयता पो हो, यो कसरी गलत हुन्छ?"

युवतीले भनिन्- "हे युवक ! तिमी शास्त्रका ज्ञानले थिचिएका जस्ता देखिन्छौ । तिमीलाई जीवनका व्यवहारिक ज्ञानहरूको अनुभव छैन जस्तो छ । भन तिमी कहाँ जाँदैछौ र कहाँबाट आएका हौ?"

युवकले आफू बनारसबाट पढेर आएको र बनारसमा सबै विद्यार्थीहरूलाई उछिनेर आफू प्रथम भएको, आफूले चार वेद, उपनिषद, पूराण सबै कण्ठाग्र पारेको कुरा गर्वपूर्वक बतायो ।

यी सबै कुरा बताउँदै अन्तमा उसले भन्यो- "बाह्र वर्षपछि घर जाँदैछु । पत्नीसँग विछोडिएको बाह्र वर्ष भयो । जति सक्दो छिटो घर पुग्न चाहन्छु । मेरी श्रीमती साह्रै असल छिन् । उनी मेरै बाटो हेरेर बसिरहेकी होलिन् । उनी मेरो विछोडमा कति तडपिएकी होलिन् । सायद म छिटो फर्कियोस् भनेर उनले सन्तोषी माताको व्रत पनि बसेकी होलिन् । सायद उसको त्यहि व्रतको प्रभावले म सत्र अठार वर्ष लाग्ने पढाइलाई बाह्र वर्षमा पूरा गरेर फर्कदैछु ।"

युवकका कुरा सूनेर युवती हाँस्न थाली र भनी– "हे युवक ! तिमी साँच्चै नै अव्यवहारिक र सोझा रहेछौ । तिमीले पढ्न त धेरै शास्त्र पढेका रहेछौ, तर एउटा शास्त्र भने पढ्न पटक्कै बिर्सिएछौं ।"

युवकले युवतीको कुरा बीचमा कुरा काट्दै भन्यो– "होइन होइन मैले बिर्सेको छैन । मैले भए जति सबै शास्त्र पढेको छु । कुनै शास्त्र छुटाएको छैन । छुटेको भए त मेरो समय अझै बाँकी थियो । गुरूहरूले यति छिटो पठाउनु नै हुने थिएन । अठार वर्षसम्म बस्न पाइन्थ्यो । बाह्र वर्षमै गुरूकुल छोड्न पर्दैनथ्यो ।

युवतीले भनी– "पढ्यौ होला ! गुरूकुलका शास्त्र त पढ्यौ होला तर व्यवहारिक जीवनका आइमाई शास्त्र भने पढ्न बिर्सिएछौ ।

"आइमाई शास्त्र !" युवकले अचम्म मान्दै भन्यो– "यस्तो शास्त्र पनि हुन्छ र? आइमाई शास्त्र भन्ने कुरा त मैले बाह्र वर्षसम्म गुरूकुलमा बस्दा कहिल्यै सुनिन ।"

"यस्तो शास्त्र गुरूकुलमा पढाइदैन पनि !" युवतीले भनिन्– "यस्तो शास्त्र आफ्नै जीवनको व्यवहारिक कुलमा सिक्नुपर्छ ।"

त्यसपछि दुवैजना केहीबेर मौन भए । केहीबेरको मौनलाई तोड्दै युवतीले फेरि भनिन्– "यदि तिमीलाई आइमाई शास्त्रको ज्ञान भएको आफ्नी पत्नीमाथि त्यति भरोसा गर्ने थिएनौ । तिमीले कति कुरा भन्यौ, सम्झ त । तिम्री पत्नी तिमीलाई नै कुरिरहेकी होलिन् । तिम्रो बाटो कुरेकी होलिन् र? असल होलिन् र? तर ती सबै बाहिरी आवरण मात्रै हुन् । तिम्री पत्नी तिमीले सोचे जस्ती पवित्र छैनन् । तिमीले सोचेजस्ती पतीव्रत छैनन् । र यो पनि लेखेर राख कुनै पनि नारी पतिव्रत हुनै सक्तैनन् ।"

"तिमीले त सबै शास्त्रको धज्जी उडायौ" युवकले भन्यो- "के तिमीले सति सावित्रीको बारेमा सूनेकी छैनौ? तिमीले सीता जस्ती पवित्र र पतिव्रत नारीको विषयमा सूनेकी छैनौं जस्तो छ । तिमीले यस्ता असल नारीहरूबारे सूनेकी छैनौ र तिमी आफू पनि गलत छौ । आफू व्यभिचारीणी छौ होली त्यसैले अरू नारीहरू पनि आफू जस्तै हुन्छन् भन्ने तिम्रो सोच भएको हुनुपर्छ । तर हे युवती ! ख्याल राख । यस जगतमा असल नारीहरू पनि छन् । पतिव्रत नारीहरू पनि छन् र मेरी श्रीमती पनि तिनै असल र पतिव्रत नारीहरू मध्य एक हुन्?"

"हे युवक !" युवतीले भनिन्- तिमीले जुन सति सावित्री र सीताका कुरा गऱ्यौ ती त पुरूषहरूले रचना गरेका कथा हुन् । विचार पुरूषहरूलाई देखेर दया लाग्छ । यसकारण दया लाग्छ कि विचराहरूलाई यस्ता कथाको रचना गर्नु परिरहेको छ । यस्तो कथाहरू रचना गरेर उनीहरू नारीहरूलाई सीता र सावित्री जस्तै बन्ने प्रेरणा दिन खोज्दछन् । तर नारीहरू बाहिर बाहिर सीता सावित्री जस्तो बनेर देखाइदिन्छन् तर भित्रभित्रै काम बिताइदिन्छन् ।"

युवकले भन्यो- "हे युवती ! जस्तो आफू उस्तै च्यापु भने जस्तै तिमी खराब छौ होली, त्यसैले सबैलाई आफू जस्तै खराब देख्छौ । तिमीले सति सावित्री र पतिव्रत सीताको आलोचना गरेको मलाई चित्त बुझेन ।"

"तिम्रा सीता र सति सावित्रीहरूको मैले कसरी आलोचना गरें?" युवतीले भनिन्- "ती हुँदै नभएका काल्पनिक पात्रहरूको के आलोचना गर्नु छ र? मैले त यति नै भन्न खोजेको हुँ कि पुरूषहरूले आफ्ना पत्नीहरूलाई बन्धनमा राख्ने उद्देश्यले निर्माण गरिएका कथाहरू हुन्- सति सावित्रीका कथाहरू । पुरूषहरू आफ्ना पत्नीहरू आफूप्रति निष्ठावान रहुन् र पतिव्रत रहनु भन्ने

चाहन्छन् । त्यसको लागि अनेक किसिमका कथाहरूका माध्यमले शिक्षा दिन खोज्छन् । तर तिनीहरूको प्रयास सबै असफल छ ।"

युवकले सुनिमात्र रह्यो । उसलाई कुनै जवाफ सुझेन । उ चुपचाप बसिरह्यो ।

युवक चुपचाप सुतिरहेको देखेर युवतीले फेरि भनी- "तिमीले मलाई आफू खराब भएको हुनाले अरू नारीलाई पनि खराब देखेकी हौ भनेर आरोप लगाइौ । जहाँसम्म मेरो कुरा छ- यो गाउँमा मलाई एउटी असल नारीको रूपमा लिन्छन् । मेरो विषयमा कसैले पनि नकारात्मक टिप्पणी गर्न सक्तै । तिमीले मेरो विषयमा कुनै नकारात्मक कुरा गऱ्यौ भने गाउँलेहरूमा म प्रति त्यति विश्वास छ । तर मैले यही गाउँका तीन चारजना पुरूषहरूसँग गोप्य सम्बन्ध बनाइसकेकी छु ।"

"तिमीले आफ्नो पतिलाई धोका दियौ" युवकले मधुरो आवाजमा भन्यो ।

"प्रत्येक नारीले आफ्नो पतिलाई धोका दिएकी नै हुन्छिन् ।" युवतीले भनी- "सोझी, लाटी र ब्याँग्री आइमाई छ भने बेग्लै कुरा नत्र हरेक चलाख आइमाईले आफ्नो पति बाहेक कम्तीमा अरू तीन चारजना पुरूषसँग गोप्य सम्बन्ध बनाएका हुन्छन् । बाहिर देख्दा उनीहरू असल, पतिव्रत, पतिप्रति निष्ठावान देखिन्छन् । तर उनीहरूले अरू पुरूषसँग बनाएको सम्बन्धलाई यति गोप्य राख्छन् कि कसैले पनि उनीहरूमाथि शंका गर्नै सक्तैनन् ।"

यतिञ्जेल साँझ परिसकेको थियो । युवतीका गाईहरू त्यहि चौरमा चरिरहेका थिए । झ्याउकीरि कराएको आवाज सुनिन थाल्यो ।

युवतीले कुरा टुङ्ग्याउने उद्देश्यले भनिन् - "युवक ! तिमी त सोझा रहेछौ । सायद तिमीले पनि आफ्नी पत्नी बाहेक अरू

नारीसँग सम्बन्ध राखेका छैनौ जस्तो छ । त्यसैले तिमी आफ्नी पत्नी पनि आफू जस्तै छ भन्ने ठान्यौ होला । तर ख्याल राख तिम्री पत्नी तिमी जस्ती सोझी छैनन् र यत्रो बाह्र वर्षसम्म तिमीलाई नै पर्खेर बसिन होला जस्तो मलाई लाग्दैन ।"

युवतीका यस्ता कुरा सुन्दा युवकलाई नमिठो लाग्यो । आफ्नी पत्नीबारे युवतीले गरेको यस्तो टिप्पणीले उसलाई दुःखी बनायो ।

युवतीले भनी– "तिमीलाई यस्तो कुराले दुःख लाग्ला । तिम्री पत्नीका बारेमा यसरी टिप्पणी गर्दा तिमीलाई मन नपर्ला । तर कसैको मन पर्नु र नपर्नुसँग सत्यको सम्बन्ध हुँदैन । सत्य तितो हुन्छ । सत्य कुरा यो हो कि अधिकांश आइमाईहरू घुसघुसे हुन्छन् । "बोल्नेले गाल पार्छ घुसघुसेले ताल पार्छ" भन्ने त तिमीले सूनेकै छौ होला । आइमाईहरू ताल पार्न धेरै चलाख हुन्छन् । उनीहरूले बनाएको भित्री सम्बन्ध यति गोप्य राख्न सक्छन् कि यति गोप्य त कुनै देशका जासुसहरूले पनि आफ्ना कुरालाई राख्न सक्तैनन् ।"

युवकले भन्यो– "तिमीले उल्टा कुरा गऱ्यौ । आइमाईहरूको रूद्रघण्टी हुँदैन । उनीहरू आफ्ना कुरा फुत्काउँछन् भन्ने पो सूनेको थिए मैले त ।"

"पुरूषहरू यस्तै उखानहरू बनाएर बसिरहन्छन् ।" युवतीले भनिन्– "पुरूषहरू महिलाका विषयमा यस्तै धारणाहरू बनाउँछन् र त महिलाहरूले पुरूषहरूको यस धारणाबाट पनि फाइदा उठाउँछन् । उनीहरू गोप्य सम्बन्ध राख्छन् र त्यसैलाई उनीहरूको रूद्रघण्टी नै नभए पनि यसरी लुकाउँछन् कि पुरूषहरूलाई पत्तै हुँदैन ।"

अब त अँध्यारो नै भइसकेको थियो । युवतीले घर जाने तरखर गर्दै भनिन्- "तिमीलाई यी कुरामा परीक्षण नै गरेर हेर्ने मन छ भने म तिमीलाई प्रयोग गरेरै देखाइदिन्छु ।"

"कसरी देखाउँछौ प्रयोग गरेर?" युवकले सोध्यो ।

"अब त अँध्यारो पनि भयो ।" युवतीले भनिन्- "अब म घर जानु पर्छ । आज दिनभरि बारीमा काम गर्नाले गाईहरू दिनभरि बाँधिएको हुनाले बेलुकीपख पानी खुवाउन र एकछिन चराउन फुकाएको थिएँ । अब त अँध्यारो भइसक्यो । गाई लिएर घर जान्छु । तिमी कहाँ बस्छौ र? यस धर्मशालामा केही खानेकुरा छैन । ओछ्याउने कुरा पनि छैन ।"

एकछिन केही सोचे झैं गरी युवतीले भनि- "तिमी यसो गर । यहाँबाट अल्ली पर एउटा पसल छ । त्यहाँबाट एउटा नयाँ दुलहीले लगाउने जस्तो सारी र पछ्यौरा किनेर लिएर यहीं आएर मलाई पर्खीराख । म घर गएर गाई बाँधेर आउँछु अनि जे गर्नुपर्छ गरौंला ।"

युवतीले के गर्न खोजी भनेर युवक चकित पऱ्यो । युवती गाई धपाउँदै लागी । युवक पसलतिर गएन । युवकले बनारस बाटै आफ्नी पत्नीका लागि राम्रो सारी र पछ्यौरा लिएर आएको थियो । त्यहि झोलाबाट बाहिर निकालेर बसिरह्यो ।

केही बेरमै युवती त्यहाँ आइ । उसले त्यो सारी लगाई । पछ्यौराले टाउको र अनुहार ढाक्ने गरी ओढी ।

उसले भनी- "अब तिमी मसँगै मेरो घर हिंड घरमा मेरा श्रीमान मात्रै छन् । म माइतमा आमा बिरामी हुनुहन्छ भन्ने खबर अयो । माइत जान्छु भनेर घरबाट आएकी हुँ । मेरा श्रीमानले यस्तो रातीमा जाने भनेर सोधेका थिए । तर आमालाई चापेको छ रे भन्ने खबर आएको छ भनेर हतार हतार यता आएको हुँ ।"

उसले आफ्नो भनाइलाई निरन्तरता दिँदै भनी– "तिमी मलाई लिएर त्यस घरमा जाउ र भन कि म परदेशबाट आएको हुँ । नयाँ दुलही लिएर आएको हुँ । यहाँको भाषा पनि त्यति बुझ्न सक्तिन यो दुलहीले । "आजको रात बास दिनुपर्‍यो ।" भनेर बास माग्नु । मेरो बूढा साँझमा आएको पाहुनालाई अत्यन्तै आदर गर्छन् । उनले बास दिनेछन् । तिमी त्यहाँ मसँग धेरै नबोल्नु ।"

यति भनेर उ अघि लागी । युवक युवतीकोपछिपछि गयो । जब घर आयो । युवकले अल्ली चर्को आवाजमा सोध्यो– "यो घरमा को हुनुहुन्छ होला?"

"को हो? किन र?" एउटा पुरूषले सोध्यो ।

"हजुर हामी हौं । हाम्रो घर यहाँबाट एक दिन टाढाको गाउँमा पर्छ । म परदेशबाट आएको हुँ । उतैबाट बिहे गरेर नयाँ दुलही लिएर आएको । आजको एक रातलाई बास दिनुहुन्थ्यो कि?"

"साँझका पाहुना देवता बराबर भन्छन् ।" त्यो घरबेटीले भन्यो– "साँझमा आउनु भएको छ, बास हुँदैन भनेर कसरी भन्ने? तर आज मेरी पत्नी पनि छैनन् । उनको आमा बिरामी भएको खबर आएकोले अघि साँझमै माइत गइन् । तपाईंहरू आफै खाना बनाएर खान सक्नुहुन्छ भने बस्नुहोस् ।"

घरबेटीले उनीहरूलाई भान्छाकोठा देखाइदिए । चामल तरकारी, घ्यू सबै ठिक्क पारिदिए र सुत्ने व्यवस्था पनि भान्छा कोठाकै एक छेउमा गरिदिएर उनी आफ्नो सुत्ने कोठातिर गए ।

त्यो नयाँ दुलहीले खाना बनाइन् । उनको आफ्नै भान्छा थियो । सधैं काम गरिरहेको भान्छाकोठा भएकोले उनलाई कुनै नौलो भएन । अति मिठो खाना तयार गरिन् ।

थोरै तरकारी एउटा कचौरामा हालेर घरबेटीलाई चाख्न दिन उनको कोठामा गए । घरबेटीले त्यो तरकारी चाख्दै भने- "ओहो ! तपाईंकी श्रीमती खाना बनाउन अत्यन्तै सिपालु हुनुहुँदो रहेछ । मेरी श्रीमती पनि यस्तै सिपालु छे । असाध्यै मिठो तरकारी बनाउँछे । मलाई अरूले पकाएको त पटक्कै मन पर्दैन । तर तपाईंको श्रीमतीले मेरै श्रीमतीले पकाएको जस्तै छ है !"

त्यो तरकारी उसैकी श्रीमतीले नै पकाएकी थिई अनि उस्तै किन नहोस् ।

घरबेटीले फेरि भने- "कति गाह्रो भयो होला तपाईंकी पत्नीलाई नुन बेसार खोज्न । नयाँ भान्छामा खोजी खोजी पनि यत्तिको मिठो तरकारी बनाउनु भएछ ।"

खाना खाइसकेपछि सबैजना सुत्न लागे । घरबेटी आफ्नै कोठामा एक्लै सुते । ती युवक युवतीसँग भान्छा-कोठामा सुते । दुवैले जिन्दगीको एउटा मिठो आनन्दको रसपान गरे ।

युवक बाह्र वर्षदेखि यौन चाहनाको भोकले रन्थनिएका थिए । धीत मरून्जेल यौन सम्बन्ध राखे ।

भोलिपल्ट बिहानै सबेरै दुवैजना उठेर घरबेटीसँग बिदा भए । बिदा हुने बेलामा घरबेटीले भने- "भाइ राम्रोसँग जानुहोला । तपाईं भाग्यमानी हुनुहुन्छ । लछिनकी श्रीमती पाउनुभएको छ । कुनै पनि महिला लक्षिन कि छन् कि अलछिना भन्ने कुरा उनले पकाएको खानेकुराबाटै थाहा हुन्छ ।"

त्यसपछि दुवैजना हिजो साँझमा भेट भएको धर्मशालामै आए । धर्मशालामा आएर युवतीले सारी र पछ्यौरा खोलिन् र युवकलाई दिँदै भनिन्- "घर लगेर श्रीमतीलाई लगाईदेउ, यदि श्रीमती तिमीलाई नै पर्खिरहेकी रहिछ भने ।"

"भयो यो सारी तिमी नै लगाउ ।" युवकले भन्यो– "तर तिमीलाई एउटा कुरा सोधौं?"

"सोध न !" युवतीले भनिन् ।

"अब तिमी घर गएर के भन्छौ? बिमारी नै नभएकी आमालाई बिरामी बनाएर यत्रो नाटक गऱ्यौ । यी कपडा लिएर जाँदा के भनेर जवाफ दिन्छौ? कतै यो कपडा श्रीमानलाई देखाउन नसकेर मलाई लैजा भनेकी त होइनौ?"

"अब घर गएर भनिदिन्छु त्यतिकै आतिदा रहेछन् । पेटको गानो गएकोले आमा रूनुभएछ । त्यतिकैमा सबैजना आतिएछन् । वैद्यले औषधि दिएपछि ठिक भइहालेछ ।"

युवतीले भन्दै गई– "मेरा माइती यतै नजिकै आएका छन् । पहिला त तिम्रो गाउँ नजिकै थियो । म माइत जाने आउने गरिरहन्छु । प्रायः बेलुकी गएर बिहान फर्किन्छु । आमा बूढी हुनुहुन्छ । भेट्न आइरहेको हुन्छु । त्यसैले आजको आउनुलाई पनि मेरा बूढाले फरक ढंगले लिने छैनन् । जहाँसम्म कपडाको कुरा छ भाइले बुहारीलाई ल्याइदिएको रहेछ । बुहारीले मन पराइन, मलाई दियो भनिदिन्छु ।"

युवतीको यस्तो बठ्याइ र चतुऱ्याईं देखेर युवक दंग पऱ्यो । आइमाईको चरित्र र पुरूषको भाग्य दैवले पनि जान्न सक्तैन भन्थे हो रहेछ भन्ने सोच्न थाल्यो युवकले ।

युवकले सूनेको थियो आइमाईले चाहे एकै छिनमा पुरूषले चाहे कहिले कहिले । यो कुरा पनि अहिले पुष्टि भयो ।

उ त्यस युवतीसँग विदा भएर आफ्नो गाउँतिर लाग्यो । बाटोमा घना जंगल थियो । उसले मनमा अनेक कुराहरू खेलाउँदै अघि बढिरह्यो । उसले सोच्न थाल्यो– "के उसकी श्रीमती उसलाई पर्खेर बसिरहेकी होली? के उसकी श्रीमती

यतिञ्जेल कसैसँग पनि यौन सम्बन्ध नराखी बस्न सकेकी होली?

उसकी पत्नी अल्ली कामुक किसिमकी थिई भन्ने उसले सम्झन थाल्यो । बिहे गरेपछि हरेक रात यौन सम्बन्ध राख्ने गर्दथ्यो । यौन सम्बन्ध राख्नुमा उभन्दा पहिला उसैको पत्नीले पहिलो अग्रसरता देखाउँथी । उसले हरेक रात चाहना राख्थी । यति तिव्र चाहना हुने आइमाईले यत्रो बाह्र वर्ष कसरी बिताइहोली ।

दुई वर्षसम्म सँगै बस्दा पनि उसकी पत्नी गर्भवती हुन सकेकी थिइन । उसले घर छाड्नु अघिका रातहरूमा पनि पत्नीलाई विर्यदान गरेको थियो । के त्यो विर्यदनको कारण उसले गर्भधारणा गरिहोली?

त्यसबेला हिजोआज जस्तो मोवाइल, टेलिफोन, इमेल इन्टरनेटको जमाना थिएन । चिठीपत्र पठाउने चलन पनि थिएन । नेपालको गाउँबाट बनारस जानु भने अत्यन्तै टाढाको कुरा थियो । यसले आफ्नो घर गाउँको समाचार पाउने कुरा असंभवै थियो । त्यसैले उसले आफ्नो घर र पत्नीबारे केही थाहा पाएको थिएन ।

उ आफ्नी पत्नीबारे अनेक कल्पना र तर्कना गर्दै घर पुग्यो । घर पुगेपछि उसले थाहा पायो- उ गएको केही महिनापछि उसकी पत्नी उनीहरूकै घरको गोठालोसँग यौन सम्बन्ध राखेकै अवस्थामा गाउँलेहरूले पक्रिएछन् । त्यहि गोठालोसँगै उसलाई गाउँबाट निकालीदिएका रहेछन् ।

युवकले यस कुरालाई सहज रूपमा लियो । उसले कुनै दु:ख मानेन । उसले अर्की सोझी र असल केटी खोजेर बिहे गऱ्यो ।

आफ्नी पत्नीलाई घरमा आउँदा नपाएपछि बल्ल उसलाई घरमा आउँदा बाटोको धर्मशालामा भेटिएकी युवतीले भनेका कुराहरू याद आउन थाले । उसले भनेका कुराहरू सत्य लाग्न थाले । उसले ती युवतीलाई गुरु थापेर आइमाईशास्त्र बारे अरू कुराहरू पनि सिक्ने विचार गर्न थाल्यो ।

आइमाई शास्त्र एउटा रहस्यमय शास्त्र हो भन्ने लागेर यसबारे गहिराइपूर्वक जान्ने इच्छाले त्यो युवतीलाई फेरि भेट्ने उद्देश्यले त्यो युवक एकदिन युवतीको गाउँमा पुग्यो ।

बेलुकी पखको समय थियो । त्यो युवक युवतीको गाउँको पधेरोमा पानी खान र मुख धुन पसेको थियो । पधेरोमा एउटी महिला गाग्रोमा पानी भरिरहेकी थिई ।

जब युवक धारामा पुगेको मात्रै थियो त्यो महिला एकाएक चिच्याउन थाली । गुहार ! गुहार ! मलाई बचाउ ।

युवक आश्चर्यचकित भयो । म आउने बितिकै यो आइमाई किन डराइ? उसले– "के भयो दिदी? के भयो?" भन्दै थियो, तर ती महिला झन झन गुहार भन्दै भाग्न थाली ।

पधेरोको नजिकै खेतमा काम गरिरहेका चार पाँचजना खेतालाहरू त्यहाँ आए । उनीहरूले महिलालाई सोधे– "के भयो भाउजु? के भयो?"

महिलाले भनी– "मलाई बलात्कार गर्न खोज्यो । मलाई समात्यो ।"

खेतालाहरूलाई लाग्यो यही युवकले बलात्कार गर्न खोजेको हो । खेतालाहरूले युवकलाई कठालोमा समाते । युवक भने– "मैले केही गरेको छैन । म त पानी खान धारामा आएको थिएँ ।" भन्दै थियो । तर खेतालाहरू मध्य एउटा अधबैशे पुरुषले युवक माथि एक झापड लगाईहाल्यो ।

त्यसैबेला महिलाले भनी– "यसले होइन । यसलाई किन पिटेका? मलाई बलात्कार गर्ने त भाग्यो उ त्यतातिर भाग्यो । यो युवक त मलाई बचाउन खोज्दै थियो ।"

खेतालाहरूले त्यस युवकसँग माफी मागे र महिलाले देखाएको दिशातिर बलात्कारीलाई खोज्न दौडिए ।

आकस्मिक रूपमा नाटकीय तिरकाले आइलागेको यस घटनालाई देखेर युवक दंग पऱ्यो । यो सबै किन र केका लागि भइरहेछ? सूनेर युवक सोच्न थाल्यो ।

त्यो महिलाले युवकतिर हेर्दै भनी– "मैले त तिमीलाई चिनीसकें । त्यसैले आइमाई शास्त्रको अर्को नयाँ च्याप्टर सिकाइ रहेछु तिमीलाई । तर तिमीले मलाई चिन्यौ?"

युवकले ती महिलाको अनुहार हेऱ्यो । ती महिला त त्यहि युवती थिइ जसलाई उसले धर्मशालामा भेटेको थियो र उसको घरमा एकरात वास बसेको थियो । खासमा अहिले उ तिनैलाई भेट्न त्यो गाउँसम्म आएको थियो ।

युवकले भन्यो– "मैले तपाईंलाई चिनें । म तपाईंलाई नै भेट्न भनेर आएको हुँ ।"

"अँहँ ! तिमीले मलाई अझै चिनेका रहेनछौ" युवतीले युवकलाई छक्क पार्दै भनी– "मलाई अझै नियालेर हेर ।"

युवकले युवतीलाई नियालेर हेऱ्यो । धेरैबेर हेरेपछि बल्ल चिन्यो उ त उसैकी पत्नी पो रहिछे । बाह्र वर्ष अगाडिकी पत्नी ।



# मान्छे मरेपछि कहाँ जान्छन्?

"मान्छे मरेपछि कहाँ जान्छन् ?" एकदिन फन्टुस प्रसादले गुरू जोगेन्दरलाई सोध्यो ।

जोगिन्दर गुरूले भन्यो- "मान्छे मरेपछि कहिं पनि जाँदैन । मरेपछि सबै कुरा सकिन्छ ।"

तर फन्टुस प्रसादले पत्याउँदै पत्याएनन् । उसले शास्त्रहरूमा पढेको थियो- मानिस मरेपछि आ-आफ्नो कर्म र संस्कारअनुसार चौरासी लाख योनिमा यात्रा गर्छन् । आफ्नो पापअनुसार नरकमा जान्छन् र सजाय भोग्छन् अनि धर्म गरेको छ भने स्वर्ग पुग्छन् र सुख भोग गर्छन् ।

तर गुरू जोगिन्दरले सजिलै भनिदियो- मान्छे मरेपछि सबै कुरा सकिन्छ । यस कुरामा फन्टुस प्रसादको चित्त बुझ्दै बुझेन ।

गुरू जोगिन्दरले फन्टुस प्रसादलाई चित्त बुझाउन नसकेपछि उसले फन्टुस प्रसादलाई लिएर महागुरू प्रतापराजकहाँ लिएर गयो र भन्यो- "हे महागुरू प्रतापराज ! यस फन्टुसप्रसादले मलाई गुरू मानेर मान्छे मरेपछि कहाँ जान्छन् भनेर सोध्यो । उसले मलाई गुरू मानेर प्रश्न सोधेपछि उसको प्रश्नको उत्तर दिएर उसलाई चित्त बुझाउनु मेरो कर्तव्य हो । मैले उसलाई उत्तर दिएँ । मान्छे मरेपछि सबै कुरा सकिन्छ केहि पनि बाँकी रहँदैन त्यसैले मान्छे मरेपछि कहाँ जान्छन् भनेर सोध्नु नै बेक्कारको सोधाइ हो । मान्छे मरेपछि कतै पनि जाँदैन भनेर उत्तर दिए । तर उसले चित्त बुझाएन । त्यसैले हे महागुरू ! तपाईंले नै उसको चित्त बुझाइदिनु पर्‍यो ।"

महागुरू प्रतापले झसँग भए झैं गरी भने- "साँच्चै मान्छे मरेपछि कहाँ जान्छन् हैं?"



"ल महागुरू ! तपाईंलाई नै थाहा रहेनछ ?" जोगिन्दरले हाँस्दै भन्यो– "मान्छे मरेपछि कतै जाँदैन ।"

महागुरूले तर्क गरे– "जान्छ, जोगिन्दर जान्छ । मान्छे मरेपछि कतै जान्छ ।"

जोगिन्दरले सोधे– "कता जान्छ महागुरू?"

"कता जान्छ कता ! जान चाहिं जान्छ, तर कता जान्छ । यो चाहिं म भन्न सक्तिन है ।" महागुरूको उत्तर थियो ।

महागुरूले एउटा पूरानो धार्मिक कथा सम्झिए उनले त्यहि कथा सूनाएर मान्छे कता जान्छ भन्ने कुरा सम्झाउने विचार गरे ।

महागुरू प्रतापले सूनाएको कथा यस्तो थियो–

उहिल्यै विश्वामित्र ऋषिको आश्रममा वशिष्ठ ऋषि आएछन् । त्यसैबेला कताबाट घुम्दैघुम्दै नारद र बाल्मीकी ऋषि पनि आइपुगेछन् । यिनीहरूबीच छलफल भएछ । छलफलको विषय थियो– मान्छे मरेपछि कहाँ जान्छन्?

विश्वामित्रले भने- "सलाइको काँटीलाई सलाइको बट्टामा रगडेपछि आगो उत्पत्ति हुन्छ, केही बेर बल्छ र निभ्छ। निभेपछि त्यो आगो कहाँ जान्छ?"

नारदले जवाफ दिए– "आगो जहाँबाट आएको हो त्यहिं जान्छ।"

विश्वामित्रले भने- "हो त्यसरी नै मान्छे मरेपछि पनि त्यहिं जान्छ जहाँबाट उ आएको हो। जसरी सलाईको काँटीको सलाइको बट्टासँग घर्षण गरेपछि आगो उत्पत्ति हुन्छ उसरी नै पुरूषको लिंगलाई महिलाको योनिसँग घर्षण गरेपछि नयाँ सन्तान पैदा हुन्छ। जसरी काँटीको छेस्को रहुन्जेल आगो बलिरहन्छ। त्यो छेस्कोमा बल्ने वस्तु विद्यमान रहुन्जेल काँटी बलिरहन्छ र जब त्यो काँटीमा बल्ने बस्तु तेल सकिन्छ तब त्यो आगो निभ्छ। उसरी नै महिला र पुरूषको लिंग र योनीको घर्षणबाट पैदा भएको नयाँ मानिसको पनि तेल भइन्जेल वा उसको इन्धन भइन्जेल उ जीवित हुन्छ। त्यो तेल सकिएपछि उ पनि मर्छ। सलाईको काँटी निभे झैं गरी मानिस पनि मर्छ।"

नारदले सोधे- "त्यो त ठिक छ। मान्छे आफूभित्रको इन्धन भइन्जेल जीवित हुने हो र इन्धन सकिएपछि उ मर्छ। तर उ मरेपछि कहाँ जान्छ?"

विश्वामित्रले भने- "उ त्यहिं जान्छ जहाँबाट उ आएको हो।"

वशिष्ठले सोधे- "मान्छे कहाँबाट आएको हो?"

विश्वामित्रले भने- "उ त्यहिबाट आएको हो जहाँ मरेपछि पुग्छ।"

विश्वामित्रको कुरा काट्दै भने- "मेरो कुरा पनि सूननुहोस् समुन्द्रको पानी छ। त्यो पानीलाई सय डिग्रीसम्म तताएपछि पानी हराउँछ। पानी वाफ बन्छ। पानीलाई जिरो डिग्रीसम्म

चिस्याउने हो भने पानी हराउँछ र पानी वरफ बन्छ । पानी हराएको या मरेको या बिलाएको जस्तो लागे पनि पानी बिलाएको छैन । पानीले रूप मात्र फेरेको हो । त्यहि पानी चिसो ठाउँमा वरफको रूपमा बस्छ । त्यहि पानि मध्यम खालको तापक्रममा तरल अवस्थामा हुन्छ र त्यहि पानी तातो ठाउँमा वाफको रूपमा बस्छ तर पानी मर्दैन । त्यस्तै मान्छे पनि मर्दैन । उ विलाएको जस्तो लागेपनि उ बिलाउँदैन । उसले रूप मात्रै फेर्ने हो ।"

नारदले सोधे- "ल ठिक छ तपाईंको कुरा माने । मान्छे मर्दैन । मान्छेले रूप मात्रै फेर्ने हो । तर मान्छे मरेपछि कुन रूपमा हुन्छ त? उ कहाँ जान्छ त?"

वाल्मीकिले जवाफ दिए– "मान्छे मरेपछि त्यहिं जान्छ जहाँ उ अहिले छ ।"

वशिष्ठले सोधे- "मान्छे अहिले कहाँ छ?"

वाल्मीकिले जवाफ दिए- "हो, मूल प्रश्न बल्ल उठ्यो । मूल प्रश्न यहि हो । मान्छे मरेपछि कहाँ जान्छ? भन्ने प्रश्न मुख्य होइन । मुख्य प्रश्न त उ अहिले कहाँ छ? पो हो ।"

विश्वामित्रले भने- "मान्छेले अहिले म कहाँ छु? भनेर विचार गऱ्यो भने उ मरेपछि कहाँ जान्छ? भन्ने प्रश्नको उत्तर पाउँछ ।"

वशिष्ठले थपे- "मान्छेले म कहाँ छु? भनेर विचार गर्ने होइन म को हुँ? भनेर प्रश्न गर्नुपर्छ । मलाई चिनेपछि उ कहाँ छ भन्ने थाहा पाउँछ । उ कहाँ छ भन्ने उसले थाहा पाएपछि उ मरेपछि कहाँ जान्छ भन्ने कुरा पनि जान्दछ ।" नारदले वशिष्ठलाई सोधे- "तपाई अहिले कहाँ हुनुहुन्छ?"

वशिष्ठले उत्तर दिए- म अहिले कोशी नदीको किनारमा रहेको आश्रमको चकटीमा बसिरहेको छु ।"

नारदले भने- "ओहो ! तपाईंले यस्तो गाह्रो प्रश्नको उत्तर कति सजिलै दिनुभयो है । यो चकटीमाथि तपाईं बसिरहनु भएको हो कि तपाईंको शरीर?"

वशिष्ठले उत्तर दिए- "म र मेरो शरीर फरक चिज हो र?" म र शरीर एउटै हो । म नै शरीर हुँ । शरीर नै म हुँ ।"

नारदले सोधे- "यदि तपाईं नै शरीर हुनुहुन्छ भने तपाईं मरेपछि तपाईको शरीर त त्यहि हुन्छ अनि तपाईंका आफन्तहरू तपाईंलाई मऱ्यो भनेर किन रून्छन् त? तपाईं मरेपछि तपाईंको शरीर त त्यहि हुन्छ तर चल्दैन शरीर बोल्दैन । किन त?"

यसको उत्तर विश्वामित्रले दिए । उनले भने- "निदाएको बेलामा वा बेहोश भएको बेलामा पनि शरीर बोल्दैन, चल्दैन ।"

नारदले भने- "निदाएको बोलामा शरीरका भित्री अंगहरू त चलिरहेका हुन्छन् । फोक्सोले सास लिइराखेका हुन्छन् । मुटु धड्किरहेका हुन्छन् । बेहोशीको क्षणमा पनि मान्छे सास त फेरिरहेको हुन्छ ।"

विश्वामित्रले भने- "गाढा निन्द्रा या बेहोशीको क्षण मानसिक मृत्यु हो । शारीरिक मृत्यु होइन । मनको मृत्यु हो ।"

नारदले भने- "यदि निदाएको बेलामा मान्छेको मन मात्रै मरेको हो भने मान्छे ब्यूँझिएपछि त्यो मन फेरि कसरी जीवित भयो?"

विश्वामित्रले भने- "शरीर कहिल्यै बेहोश हुँदैन । शरीर कहिल्यै निदाउँदैन । निदाउने, बेहोस हुने मन पो हो । मन बेहोश हुन्छ । बेहोशी र गाढा निन्द्रामा मन बेहोस हुने हो, शरीर होइन मन नै निदाउँछ, मन नै जाग्छ ।

नारदले सोधे- "त्यसो मरें भने भनेको चाहिं के हो त? शरीर मर्छ कि मन?"

वशिष्ठ बोल्न थाले । उनले भने– "निदाउनु र बेहोश हुनु भनेको मनको बेहोशी हो, मन मर्दैन निदाउँछ या बेहोश हुन्छ फेरि जागा हुन्छ । यसको निन्द्रा पुगेपछि मन जागा हुन्छ । सक्रिय हुन्छ । अर्थात् मनको निष्क्रिय अवस्थालाई निन्द्रा या बेहोशी भनिन्छ । सक्रिय अवस्थालाई जागा अवस्था भनिन्छ ।"

विश्वामित्रले थपे- "शरीर मर्दा शरीर र मन दुवै मर्न पनि सक्छन् अथवा शरीर मात्रै मरेर मन नमर्न पनि सक्छ । अधिकांश मानिसको जीवन यस्तै हुन्छ । शरीर मर्छ, मन मर्दैन । ध्यान गर्ने साधु सन्त र ज्ञानीहरूको शरीर मर्दा मन पनि मर्छ । उनीहरू जीवित हुँदा पनि शरीर मात्रै जीवित हुन्छ । मन त उनीहरूले मारिसकेका हुन्छन् । त्यसैले उनीहरूको शरीर मर्दा उनीहरू पूरै मर्छन् । शुन्यमै हराउँछन् ।

बाकी कुरा वाल्मीकीले भने- "साधारण मानिसहरूको चाहिं शरीर मर्छ, तर मन मर्दैन । मनले दुःख पाउँछ । आफ्नो संस्कार र कर्मअनुसार यस ब्रह्माण्डमा स्वप्नवत रूपमा दुःख सुखको अनुभूति गरिरहन्छ ।"

वशिष्ठले छलफललाई टुग्याउँदै निष्कर्षमा निम्न कुरा प्रस्तुत गरे-

ध्यान = मनको मृत्यु शरीर जीवित र सक्रिय

बेहोशी र निन्द्रा = शरीर जिवीत मन निष्क्रिय तर जीवीत (बाहिरी अंग निष्कीय भित्री अंग सक्रिय)

मृत्यु ज्ञानी = शरीर र मन दुवै मृत्यु

अज्ञानी = शीरको मृत्यु तर सक्रिय रूपले जीवित ।

वशिष्ठले निष्कर्षमा भने- "मान्छे मरेपछि उसको शरीर जलाइन्छ । खरानी भएर माटोमा मिल्छ । उसको शरीरको पानीको मात्रा पानीमै मिल्छ । फोक्साको श्वास हावामा मिल्छ ।

शरीरभित्रको तापक्रम पृथ्वीको तापक्रममा मिसिन्छ । यसरी नै शरीरभित्रको खाली भाग आकाश तत्त्व आकाशमै मिल्छ ।"

केहीबेरपछि केही सोचे झैं गरी फेरि भने- "अब बाँकी त केही पनि हुँदैन । आत्मा वा मन बाँकी रह्यो । मन चाहिं नाश हुँदेन । उसको मन स्वप्नवत रूपमा ब्रह्माण्डमा भट्कन थाल्छ । उसले जिन्दगीभर जे जस्तो विचार र अनुभूति गरेको छ त्यसअनुसार उसको अनुभूतिमा जे कुराको पक्ष बलियो छ त्यहिअनुसार उसले आकार ग्रहण गर्छ या अर्को जन्म लिन्छ ।"

नारदले सोधे- "मनले यहि पृथ्वीमै जन्म लिन्छ या अर्को लोकमा?"

वशिष्ठले भने- "यहि पृथ्वीमा नै जन्म लिन पनि सक्छ अरू नै लोकमा जन्म लिन पनि सक्छ । हाम्रा पञ्च ज्ञानेन्द्रिय र पञ्च कर्मेन्द्रियले जानेको ब्रह्माण्ड भन्दा बाहिर पनि अनेकौं ब्रह्माण्ड छन् । मनको आयामबाट देखिने ब्रह्माण्ड र यो सीमित पञ्च ज्ञानेन्द्रिय मार्फत अनुभव गरिने सीमित ब्रह्माण्ड बीच फरक छ । मनको आयामबाट लाखौं ब्रह्माण्डहरू देखिन्छन् तीमध्ये मनको आफ्नो अवस्थाअनुसार कुनै पनि ब्रह्माण्डमा जन्म लिन सक्छ । जन्मको मतलब मनले आकार ग्रहण गर्छ ।"

नारदले अझै कुरो नबुझे जस्तो गरी सोधे- "यसलाई अझै स्पष्टसँग भन्नुहोस् महर्षि ।"

वशिष्ठले भने- "हे नारद ! तपाईंले कुरा बुझ्नुभएको छ । तपाईंले कुरा बुझी बुझी पनि नबुझेजस्तो गरेर सोध्नुको आशय मैले बुझेको छु । संसारका मानिसहरूले बुझुन् भन्ने आशयले तपाईंले यसरी कोट्याई कोट्याई प्रश्न सोध्नु भएको हो । तर हे नारद ! यो कुरालाई बुझ्नको लागि ज्ञानी पुरूषको सँगत नै गर्नुपर्छ ।"

रूमालले मुख छोप्दै एकपटक खोक्तै वशिष्ठले फेरि भने- "यो धेरै गहन कुरा हो । यसलाई गहिरो पूर्वक बुझ्नका लागि कुनै आत्मज्ञान प्राप्त गुरूको शरणमा परेर उनको सँगत गर्नु पर्छ । उनीसँगको लामो सँगत गरेर मात्रै यस्ता कुरा अनुभूति गर्न सकिन्छ । गुरूले पनि एक्कै चोटी सबै बात बताउन सक्तैनन् । थोरै गरेर गुरूले ज्ञान दिन्छन् । गुरूसँगको लामो उठबस र सँगतले यो परम ज्ञान पाउन सकिन्छ । यो ज्ञान पढेर र सूनेर जानिने ज्ञान होइन । यो अनुभूति गर्ने ज्ञान हो । यो परम ज्ञान हो ।

मान्छे मरेपछि कहाँ जान्छ र के हुन्छ भन्ने कुरा शब्दले व्याख्या गरेर भन्न सकिने कुरा होइन । अनि शब्द सूनेर या पढेर बुझिने कुरा पनि होइन यो अनुभूति गर्ने कुरा हो । मानिसले आफ्नो मनलाई बुझ्न सक्नुपर्छ । मनलाई सबै कोणबाट बुझ्न सक्यो । मरेपछि उ कहाँ जान्छ ? के हुन्छ ? सबै कुरा उसले बुझ्न सक्छ । अघिल्लो जन्ममा उ कहाँ थियो भन्ने कुरा पनि उसले बुझ्न सक्छ ।"



# ऋषी सन्तोषानन्द र बिपना

यो रामायणकालीन घटना हो । ऋषि सन्तोषानन्दको प्रेममा परिन् बिपना । उनले सन्तोषानन्दको सेवा गरिन् । उनलाई खुशी पार्न उनले अनेक कोशिश गरिन्, तर ऋषि सन्तोषानन्दले उनीप्रति पटक्कै रूचि देखाएनन् । बिपना काली वर्णकी, होची युवती थिइन् । एउटा गरिब घरपरिवारमा जन्मिएकी बिपना साहित्य, कला र अध्यात्ममा रूचि राख्थिन् । ऋषिको आश्रममा दैनिक प्रवचन हुने गर्दथ्यो । ऋषिले जीवनका अनेक विषय र प्रसँगमा अत्यन्त घतलाग्दो प्रवचन गर्दथे । उनको यो प्रवचनबाट औधि प्रभावित भएकी थिइन् बिपना । ऋषिको उमेर पनि धेरै थिएन । उनी जवान नै थिए । ऋषिको प्रवचन गर्ने शैली, भावभंगिमा सबैले बिपनालाई असाध्यै प्रभावित पारेको थियो । उनको जवानी र रूपरंगले पनि बिपनालाई आकर्षित गरेको थियो ।

उनले ऋषिसँग प्रेमको लागि अनुनय विनय गरिन् । उनलाई खुशी पार्न अनेक प्रयत्न गरिन् । उनको प्रेम पाउन लालयित भइन् । जति गर्दा पनि ऋषिको मन पग्लिएन ।

वास्तवमा ऋषि अलौकिक व्यक्ति थिए । उनले आत्मज्ञान पाइसकेका थिए । उनलाई संसारका गतिविधि क्रियाकलापहरूमा कुनै आकर्षण थिएन । धन, दौलत, सम्पत्ति, स्त्री सबैप्रति उनलाई वैराग्य आएको थियो । मान प्रतिष्ठा सम्मान जस्ता कुरा उनका लागि तुच्छ थिए । यौन क्रियामा पाइने आनन्द उनका लागि अर्थहीन थियो । त्यो त विष थियो ।

उनलाई कुनै स्त्रीसँग सम्भोग गरेर रसरंगमा भुल्ने कुनै इच्छा थिएन त्यसैले उनले बिपनालाई बेवास्ता गरिरहेका थिए । तर बिपनालाई किन किन ऋषिको प्रेमले अति आकर्षण गरिरहेको थियो । उनको निम्ति आफू ऋषि बिना अधुरो भएको

अनुभव हुने गर्दथ्यो । उनलाई ऋषिसँगको सहवासले आफू पूर्ण हुन्छु भन्ने लागिरहन्थ्यो ।

ऋषिको प्रेम र माया पाउन उनी अत्यन्तै लालायित थिइन् । त्यो प्रेमको निमित्त अति व्याकुल थिइन् । ऋषिलाई प्रेम गरिन् । ऋषिले एक दिन आफ्नो प्रवचनमा भनेका थिए- "यदि तिमी आफ्नो प्रेमी या प्रेमिकालाई निरन्तर प्रेम गरिरहन्छौ र शुद्ध भावले प्रेम गरिरहन्छौ भने उसको मन एकदिन अवश्य पग्लिनेछ । उसले तिमीलाई पनि प्रेम गर्न थाल्नेछ ।"

कसैले प्रश्न सोधेको थियो- "म उसलाई औधि रूचाउँछु । उसलाई प्रेम गर्छु, तर उ मबाट झन झन पर भाग्छ, म के गरौं गुरू?"

यहि प्रश्नको उत्तरमा ऋषिले माथिको कुरा भनेका थिए । वास्तवमा त्यो प्रश्न बिपनाले नै सोधेको प्रश्न थियो । तर उनले आफ्नो नाममा नसोधेर अरूकै नाममा प्रश्न पठाएकी थिइन् ।

ऋषिको उत्तर सूनेपछि उनको चित्त बुझेको थियो । उनले ती ऋषिको मनमा प्रभाव पारेरै छाड्छु भन्ने संकल्प गरेकी थिइन् । आफ्नो प्रेमले उनीमाथि प्रभाव पार्छ भन्ने उनलाई लागिरहेको थियो ।

उनको यो गलत सोच रहेछ । प्रेमले प्रभाव त पार्छ तर अज्ञानीमाथि मात्र । ज्ञानीमाथि जति प्रेम गरे पनि प्रभाव पार्दैन । यदि म निरन्तर कसैलाई प्रेम गर्छु भने उसले मलाई पनि प्रेम गर्न थाल्नेछ, तर यो कुरा अज्ञानीहरूका मामिलामा मात्र लागू हुनेछ । ज्ञानीका मामिलामा यो लागु हुँदो रहेनछ ।

यदि यो कुरा ज्ञानीमा पनि लागू हुने भए बिपनाले यति धेरै माया गर्दा ऋषि सन्तोषानन्दको मन पग्लिन पर्ने हो । अनि सन्तोषानन्दले पनि विपनालाई मन पराउनुपर्ने । हो तर त्यसो हुन सकेन ।

सन्तोषानन्दले बिपनालाई वास्ता नगरे पनि बिपना पनि विस्तारै विरक्त हुन थालिन् । सन्तोषानन्दलाई श्राप दिएर आत्महत्या गर्ने विचार गरिन् । उनले यसबारे धेरै विचार गरिन् । किन होला सन्तोषानन्दले आफूलाई बेवास्ता गरेको भनेर उनका मनमा अनेकौं कुराहरू खेल्न थाले ।

सायद आफू काली भएर नराम्री भएकोले पो सन्तोषानन्द ऋषिले मन पराएनन् कि भन्ने पनि विचार आयो । अल्ली होची छु, त्यसैले पो वास्ता गरेनन् कि । अथवा गरिवकी छोरी भनेर पो हेला गरका हुन कि?

तर सन्तोषानन्दको मनमा बिपनाप्रति त्यस्तो कुनै नकारात्मक सोचाइ थिएन । उनलाई बिपना न त राम्री लाग्दथ्यो न नराम्री लाग्दथ्यो । उनलाई कुनै पनि स्त्रीप्रति आकर्षण थिएन न त कुनै स्त्रीप्रति विकर्षण नै थियो । उनको मन तटस्थ थियो ।

सन्तोषानन्दलाई त जीवनबाट मुक्ति पाउनु थियो । उनलाई फेरि गर्भमा पसेर जन्म लिन मन थिएन । कुनै कुराप्रति मोह र आसक्ति राखेर जीवन बाँच्दा त्यसले चित्तलाई बाँध्न थाल्छ । त्यो एउटा बन्धन बन्न जान्छ र मान्छेले फेरि जन्म लिनुपर्छ भन्ने उनको सोचाइ थियो । उनी फेरि जन्म लिन चाहँदैनथे । उनलाई मुक्ति चाहिएको थियो । मुक्तिको यात्रामा लागेकोले नै उनी बिपनासँग तर्केका थिए ।

तर बिपनाले यो कुरा बुझ्न सकिन र आफूलाई सन्तोषानन्दले हेला गरेको अनुभव हुन थाल्यो उनलाई । सन्तोषानन्द राम्री र धनी घरकी छोरीलाई मात्र हेर्छन् । उनलाई रूप चाहिएको छ । हामी जस्ता नराम्री केटीलाई उनी मन पराउँदैनन् भन्ने सोच उनको मनमा उब्जियो ।

अब उनको मनमा सन्तोषानन्दप्रति घृणा जाग्न थाल्यो उनले भगवान् विष्णुको ध्यान गर्न थालिन् भगवान् विष्णु आएर

वरदान माग भन्नुभयो । विष्णु भगवान्सँग उनले आफू जसलाई श्राप दिए पनि लाग्ने होस् भनेर वरदान मागिन् । विष्णुले भन्नुभयो- "तिमीलाई यो वरदान त दिन्छु तर तिमीले तीन पटकसम्म श्राप दिएको लाग्नेछ, त्यसपछि तिम्रो श्राप लाग्ने छैन ।"

बिपनाले- "किन र प्रभु । मैले जहिले जतिसुकै श्राप दिएपनि त्यो श्राप लाग्ने वरदान मागेकी हुँ ।"

बिपनाले यति भन्न पनि भ्याएकी थिइनन् भगवान् कि विष्णु त्यहाँबाट अलप हुनुभयो ।

त्यसपछि बिपना सन्तोषानन्दको नजिक गइन् र आफूले उनलाई मन पराएको र उनको श्रीमती बन्न चाहेको कुरा व्यक्त गरिन् ।

सन्तोषानन्दले आफ्नो उद्देश्य केवल आत्मज्ञान पाउने र त्यो आत्मज्ञानमा लीन हुने चाहना मात्र भएकोले बिपनालाई मात्रै नभएर कुनै पनि नारीसँग सम्बन्ध नराख्ने संकल्प गरेकोले बिपनासँग बिहे गर्न नसक्ने कुरा दोहोऱ्याए । बिपनालाई सन्तोषानन्दको कुराले औधी दु:ख लाग्यो र रीस पनि उठ्यो ।

बिपनाले रीसको आवेगमा श्राप दिइन्– "तपाईले पनि मैले जस्तै पीडा भोग्नु परोस् । जसरी म तपाईंलाई पाउन चाहिरहेको छु र पाइरहेको छैन ठीक त्यहि दशा तपाईंको मप्रति होस् । तपाईंको आत्मज्ञान अझै पाँच जन्मसम्म पूरा नहोस् ।"

बिपनाको श्रापले गर्दा सन्तोषानन्दको आत्मज्ञान पूरा हुन सकेन । त्यसपछि पनि उनले अरू जन्म लिनुपऱ्यो । मान्छेकै जन्म लिनुपऱ्यो ।

यस कलियुगमा पनि उनले जन्म लिएका छन् । उनको आत्मज्ञान अझै पूरा भएको छैन । उनले प्रेममा धोका पाइरहेका छन् र तड्पिरहेका छन् ।

अझ अनौठो कुरा के भने यस कलियुगमा बिपनाले पनि जन्म लिएकी छिन् । उनी पहिलेझैं आफ्नै रूपमा उस्तै काली, उस्तै होची, उस्तै गरिबी । सन्तोषानन्द पनि यसै युगमा जन्म लिएका छन् । आज उनी बिपनालाई असाध्यै मन पराउँछन् तर बिपना उनलाई फुटेको आँखाले पनि हेर्न चाहँदिनन् । आफूलाई पहिलो जुनीमा सन्तोषानन्दले जसरी सताएको थियो उसरी नै उनी सन्तोषानन्दलाई सताउन चाहन्छिन् ।

अघिको जुनीमा जसरी बिपना तडपिएकी थिइन् त्यसरी उनी आज सन्तोषानन्दलाई तड्पाइरहेकी छिन् ।

सन्तोषानन्दले आज बिपनाले पहिलो जन्ममा पाएको पीडा दु:ख र गरिवी भोगिरहेका छन् । यो पूर्वजन्मकै बिपनाको श्रापको कारणले हो भन्ने सन्तोषानन्दलाई थाहा छ । तर बिपनाले पूर्व जन्मका यी सबै कुरा बिर्सिएकी छिन् । उनी त आज सन्तोषानन्दलाई उसको गरिबी देखेर उबाट टाढिएको ठानिरहेकी छन् ।

सन्तोषानन्द बोलाइरहन्छन बिपनालाई– बिपना ! बिपना !! बिपना !!

तर बिपना उनको लागि सपना बनिरहेकी छिन् । सपना, केवल सपना ।

सायद सन्तोषानन्दले बिपनालाई यस जुनीमा पाउन सक्ने छैन । सायद पाउन सक्ने छैन ।

सन्तोषानन्दले बिपनालाई पाउन अनेक उपायहरू गरिरहेका छन् । तर सबै उपायहरू असफल भइरहेका छन् । एक दिन उनले बिपनालाई लामो पत्र लेखेर फेसबुकमा पोस्ट गरे । पत्र यस प्रकार थियो–

प्रिय बिपना,

धेरै धेरै प्यार तिमीलाई ।

तिम्रो नाम त बिपना थियो, तर तिमी मेरो निम्ति सपना बन्यौ । प्रिय तिम्रो एक झलक दर्शन पाउन लालयित छु । तिमीले कता कताबाट मेरो मोबाइल नम्बर भेट्टाएर फोन गऱ्यौ । त्यहि दिन तिम्रो त्यो मधुर आवाज सूनेदेखि तिमीप्रति म मोहित भएको छु । त्यसपछि तिम्रो रूपको दर्शन पाउन लालयित छु प्रिय ।

तिमीलाई सायद पूर्वजन्म र पुनर्जन्मबारे विश्वास लाग्दैन होला तर मलाई यसमा पूर्ण विश्वास छ । यतिमात्रै होइन मलाई यो पनि थाहा छ कि तिमी मलाई पूर्वजन्ममा मन पराउँथ्यौ, तर मैले नारी अनुहार नहेर्ने र नारीसँग संसर्ग नगर्ने व्रत लिएको हुनाले तिमीलाई वास्ता गरिन । त्यसबेला तिमी धेरै तड्पिएकी थियौ । त्यसको लागि मलाई माफ गर । मैले त्यसबेला तिमीलाई धेरै तड्पाएँ । मलाई आज त्यस कुराप्रति खेद छ । आफैं प्रति खेद लाग्छ ।

बिपना ! म अहिले तिमीलाई चाहन्छु । म यो जीवन तिमीसँग नै विताउन चाहन्छु । मेरी मुटुकी धड्कन ! म तिमीलाई चाहन्छु । नदीको पानीबाट बाहिर निकालिएको माछा पानीको निम्ति छटपटिए जसतै म तिम्रो निम्ति छटपटिरहेको छु । प्रिया ।

यदि तिमी मेरो कुरा सुन्दिनौ भने म पनि तिमीलाई श्राप दिनेछु जसरी तिमीले मलाई पूर्वजन्ममा श्राप दिएकी थियौ । तिमीलाई पूर्वजन्ममा विश्वास लाग्दैन भने आउ ! म ध्यान सिकाएर पूर्वजन्ममा पुऱ्याइदिनेछु । आउ बिपना आउ ।"

उही तिम्रो

सन्तोषानन्द ।



# वैशालु झारपात

'वैशालु' लंकाका राजा रावणकी भाञ्जीको नाम हो । उनी रावणकी बहिनी सुपर्णखाकी छोरी हुन् ।

जसरी एकलव्यलाई गुरू विश्वामित्रले शिष्य बनाउन चाहेनन् अथवा शिष्यको रूपमाा स्वीकार गरेनन् । केवल यस कारण स्वीकार गरेनन् कि एकलव्य शूद्र थिए ।

विश्वामित्र सम्पूर्ण शूद्रहरूका शत्रु हुन् । उनले शूद्र भएका कारण एकजना प्रतिभाशाली व्यक्तिलाई शिष्य बनाउन चाहेनन् । विश्वामित्र जातिवादका कट्टर हिमायती हुन् ।

विश्वामित्रले आफूलाई तिरस्कार गरे पनि विचरा सिधा सरल एकलव्यले उनै विश्वामित्रको मूर्ति स्थापना गरी उनैलाई गुरू थापेर धनुषवाणको साधना र अभ्यास गरे । अन्तमा उनी धनुषवाण विद्यामा परागत भएर निस्किए । यतिसम्म सिपालु भए कि विश्वामित्रका सबैभन्दा ट्यालेण्ट चेला अर्जुनसँग उनी टक्कर गर्न सक्ने भए । अर्जुनलाई समेत चुनौती दिन सक्ने भए ।

आफ्नो मुख्य र प्रतिभाशाली चेलोलाई पनि चुनौती दिन सक्ने एकलव्यसँग उनले गुरू दक्षिणाको रूपमा दाहिने हातको बूढी औंला मागेर उनलाई धनुष वाण चलाउनै नसक्ने बनाउन खोजे । तर प्रतिभाशाली एकलव्यले आफूलाई ऐरो गर्ने, खेदो गर्ने गुरूको कहिल्यै विरोध गरेनन् । उनले बूढी औंला दक्षिणाको रूपमा चढाए । उनले अब देब्रे हातले र गोडाले धनुषवाण चलाउने अभ्यास गर्न थाले ।

आजका चेलाचेली भएका भए यस्ता पक्षपाती गुरूलाई छोडिदिने थिए । आफ्नो खेदो गर्ने र खोइरो खन्ने गुरूलाई आदर सम्मान गर्ने कुरा त छोडिदिउँ यसरी बूढीऔंला दानको

रूपमा माग्ने गुरूलाई बूढी औंला दिनुको साटो उल्टो गुरूकै बूढीऔंला काटिदिने थिए ।

एकलव्यले विश्वामित्र गुरूले आफूलाई धनुषवाण विद्या सिकाउन अस्वीकार गरेपछि उनै विश्वामित्र गुरूलाई नै थापेर, उनको मूर्ति स्थापना गरेर एकान्त स्थानमा आफू एक्लैले साधना गरेर धनुषवाण विद्या सिके जस्तै घटना सुपर्णखाको जीवन पनि घटेको छ ।

सुपर्णखाले राम समक्ष प्रेमको निवेदन गरिन् । रामले आफ्नी श्रीमती सीता आफैंसँग भएकोले अर्को महिलासँग बिहे गर्न नसक्ने बताउँदै लक्ष्मण एक्लै भएकोले उनीसँग प्रस्ताव राख्न पठाइदिए । रामले एउटा ठट्टाको रूपमा एकछिन जिस्किनका लागि लक्ष्मणतिर पठाइदिए पनि सुपर्णखाले यस कुरालाई साँच्चै ठानी र लक्ष्मणको कुटिमा पुगेर लक्ष्मणसँग प्रेमको भिख मागिन् ।

लक्ष्मणले पनि जिस्किने उद्देश्यले आफू ब्रह्मचारी भएकोले बिहे गर्न नसक्ने बताउँदै आफ्नी भाउजु सीता नराम्री भएकोले दाजु राम अर्की युवतीको खोजीमा छन् त्यसैले उनैले सुपर्णखा-लाई बिहे गर्न सक्छन् भन्ने कुरा गरेर रामतिरै पठाइदिए ।

यसरी रामले लक्ष्मणतर्फ पठाउने लक्ष्मणले रामतिरै पठाउने गर्दागर्दा त्यो राक्षसनीलाई सीताप्रति रिस उठ्यो । रामले आफूलाई मन नपराउनुको कारण सीता भएर हो भन्ने उसलाई लाग्यो । उसले सीतालाई मार्ने उद्देश्यले सीतातर्फ झम्टिन थाली ।

यस्तासँग जिस्किदा ख्यालठट्टा गर्दा गम्भिर परिणाम आउन लागेको देखेर रामले लक्ष्मणसँग भन्नुभयो– "हे भाइ ! यस्तासँग

जिस्किनु हाम्रो गलत कार्य थियो । यसले त उभद्रो गर्ने भई । यसलाई तुरून्तै यहाँबाट लखेटी हाल ।"

दाजुको आज्ञा पाउना साथ लक्ष्मणले एउटा बाण हानेर शुपर्णखाको नाक र कान काटिदिए र त्यहाँबाट धपाइदिए ।



राम लक्ष्मणबाट तिरस्कृत भएकी सुपर्णखाले लक्ष्मणको मूर्ति स्थापना गरी उनैलाई पति मानेर पूजा गर्दै साधना गर्न थाली ।

साधना गर्दागर्दै एकदिन लक्ष्मणको छायाँ शरीरसँग सुपर्णखाको सम्भोग भयो । त्यसै सम्भोगको परिणाम एउटी अत्यन्तै राम्री छोरी जन्मन पुगी । त्यो छोरीको नाम राखी - वैशालु ।

वैशालु अत्यन्तै सुन्दरी र आकर्षक थिई ।

अर्कोतिर सीतालाई बन्धक बनाएर राखेका रावणले सीतालाई अत्यन्त सभ्य व्यवहार गऱ्यो । उनलाई आदर र सम्मान गऱ्यो । उनको अनुमति बिना उसले सीतालाई चोट पर्ने कुनै पनि काम गरेन । सीतालाई छुन पनि छोएन ।

तर सीताको सौन्दर्य र रूपबाट आकर्षित भएको रावण सीतालाई साँच्चै नै हृदयदेखि प्रेम गर्दथ्यो, त्यसैले उसले एउटा सीता जस्तै छाया शरीरको आविष्कार गऱ्यो ।

स्वर्ग पुग्ने भऱ्याङ बनाउने रावण, पुरूष विमान बनाउन सक्ने रावण अनि सूनमा पनि सुगन्ध थप्ने प्रयास गरेको रावणका लागि सीताको छाया शरीर बनाउन कुनै गाह्रो काम भएन ।

सीताको छाया शरीरसँग रावणको सम्भोग भयो । त्यसबाट पैदा भयो एउटा वीर बालक, त्यस बालकको नाम राखियो–झारपात ।

त्यो बालकलाई रावणको दरवारमा गोप्य रूपले हुर्काइयो । पछि विभिषण लंकाको राजा भएपछि पनि झारपातलाई अत्यन्तै प्रेमपूर्ण तिरकाले हुर्काइयो । सम्पन्न वातावरणमा हुर्काइयो ।

लंकामा राम रावणको युद्धमा रावण, मेघनाथ, कुम्भकर्ण जस्ता सबै वीरहरू मारिसकिएका थिए । रावणका बन्धुवान्धव र छोराहरूमा अब बाँकी विभीषण र झारपात मात्रै थिए ।

झारपात जवान हुँदै गयो । उ एकदिन जंगलमा शिकार खेल्न गएको थियो । उसले एउटा घना जंगलमा बैशालुलाई देखेर उनीप्रति मोहित भयो ।

यिनीहरू नाताले दिदी-भाइ पर्छन् । तर यिनीहरूलाई यो कुरा थाहा भएन । आफूहरूबीच दिदी-भाइको नाता छ भन्ने थाहा भएन । दुवै बीचमा प्रेम हुन थाल्यो ।

आफूहरूबीच दिदी-भाइको नाता छ भन्ने कुरा थाहा नपाउँदा यिनीहरूले यौन सम्बन्धसम्म राख्न पुगे । यिनीहरू जंगलमा लुकेर प्रेम गर्दथे । वैशालु फुपूकी छोरी, झारपात मामाको छोरा पर्दथे ।

यसरी फूपु चेली र मामा चेलोबीच यौन सम्बन्ध हुन पुग्यो । पछि विस्तारै विस्तारै यिनीहरूबीचको प्रेम र यौन सम्बन्ध बाहिरका मानिसहरू र लंकाका राक्षसहरूले थाहा पाए । त्यसबेला यस्तो किसिमको सम्बन्धलाई हाडनाता करणी मानिन्थ्यो । त्यस बेलाको लंकाको कानुनअनुसार यस्तो सम्बन्धलाई अनैतिक मानिन्थ्यो । यस्तो सम्बन्धलाई अपराध मानिन्थ्यो र यस्तो अपराधमा कडा सजाय हुने गर्दथ्यो ।

सर्वसाधारण व्यक्तिहरूबीच यस्तो सम्बन्ध रहेको भए उनीहरूलाई कडा सजाय दिइन्थ्यो होला । तर उनीहरू परे दरवारीया घरानाका । एउटा रावणको छोरो, अर्को सुपर्णखाकी छोरी । रावण र सुपर्णखा त मारिइसकेका थिए । तर उनीहरूको काका र मामा विभिषण नै लंकाका राजा थिए ।

राजा विभिषणको भतिज र भाञ्जी बीचको यो सम्बन्ध नाजायज सम्बन्ध थियो । यसको उजुरी विभिषणको दरवारमा पऱ्यो । यसमा के कारबाही गर्ने भन्ने छलफल गर्न विभिषणले भाइ भारदारहरूको सभा बोलाए ।

सभामा ठूलो छलफल भयो । अन्तिममा निष्कर्ष निकालियो- कानुन फेर्ने ।

अहिलेसम्मको कानुनले मामाचेलो चेलाचेली र फुपूचेली बीचको सम्बन्ध वर्जित थियो तर अब आइन्दा यो सम्बन्धलाई छुट दिने कानुन बनाए ।

त्यसबेला यो कानुनको व्यापक विरोध भयो । कट्टरवादी आर्यहरूले यो कानुनलाई टेरेनन् । उनीहरूले यस्तो सम्बन्धबाट जन्मिएका सन्तान कमजोर जन्मन्छन् भनेर यस्तो सम्बन्धलाई वर्जित गर्नुपर्ने माग राखे ।

द्रविड जातिहरूले यस किसिमको कानुनलाई उचित ठहऱ्याए ।

केही आर्यहरूले भने यदि यस्तो किसिमको कानुनलाई पारित गर्दछौ भने हामी एउटै पेटबाट जन्मिएका दाजु बहिनी र दिदीभाई बीच पनि बिहे गरिदिंदा के फरक पर्छ र? भनेर अतो थाप्न थाले ।

यदि मामाचेला र फुपू चेलीबीचको सम्बन्ध जायज हुन सक्छ भने एउटै आमाबाट जन्मिएका दाजु बहिनीबीचको सम्बन्ध पनि जायज नै हुन्छ भनेर एक कदम अगाडि बढेर विरोध जनाउन थाले ।

त्यो कानुनको विरोध गर्न कतिले त दाजु-बहिनी बीचमै बिहे गरेर पनि देखाए । उनीहरूको उद्देश्य खास गरी त्यो मामा चेला र फुपू चेलीबीच विवाह गर्न मिल्ने कानुनको विरोध गर्नु थियो । तर उनीहरूले यस किसिमले विरोध गर्दा पनि सरकारले टेरेन ।

यसरी एउटा कानुनको विरोध गर्ने अस्थायी रूपमा अपनाइएको विरोध शैली अन्ततः एउटा चलन नै बन्न पुग्यो । आज पनि कुनै (मुस्लिम) समुदायमा दाजु बहिनी बीचमा विवाह

गर्ने चलन छ । तर त्यहाँ केही शर्तहरू छन् । केही नियमहरू छन् । केही निश्चित दायराहरूभित्र त्यो चलन कायम छ ।

लंकाली राजा विभिषणले बनाएको कानुनअनुसार नै आज कतिपय मतवाली समुदायमा मामाचेलो र फुपूचेली बीचको विवाहलाई मान्यता दिइन्छ ।

त्यो कानुनको विरोध गरेका कट्टर आर्यहरूका समुदायमा भने यस्तो सम्बन्ध आज पनि वर्जित छ ।



# कुमारी मेरियम र जिसस



वाइवलमा विश्वास गर्ने मानिसहरू दिन प्रतिदिन बढिरहेका छन् र घटिरहेका छन् अनि क्रिश्चियन बनिरहेका र बनिसकेका हरूले छोड्न लागिरहेका छन् ।

गरिब मुलुकहरूमा क्रिश्चियन धर्मको प्रचार-प्रसार तीव्र भइरहेको छ । गरिब मानिसहरू क्रिश्चियन बनिरहेका छन् । गरिब देशमा क्रिश्चियन धर्म मान्नेहरूको संख्या बढिरहेको छ । त्यस्ता देशहरूमा चर्चहरू निर्माण भइरहेका छन् । तर धनि र शिक्षित देशहरूमा क्रिश्चियन धर्म मान्ने मान्छेहरू घटिरहेका छन् । युरोप र अमेरिकाका चर्चहरू खाली हुन थालेका छन् । आइतबारको दिन मानिसहरू चर्च जाँदैनन् ।

यसो हुनुका पछाडि केही कारणहरू छन् । ती कारणहरू मध्य वाइवलभित्रका अपत्यारिला र विश्वास गर्न नसकिने अन्धविश्वासी कथाहरू पनि एउटा कारण हो । जस्तो बाइवलमा जिससको जन्म एउटी कुमारी स्त्रीबाट भएको हो भन्ने कुरा लेखिएको छ । यस्तो कुरामा पढेलेखेका शिक्षित मानिसहरूलाई विश्वास गर्न गाह्रो हुन्छ ।

वाइवलका व्याख्याताहरू र धर्म प्रचारकहरू दावा साथ भन्ने गर्छन् कि जिसस कुमारी मेरियमबाट नै जन्मेका हुन् । तर यस कुरामा विश्वास गर्न गाह्रो हुन्छ । प्रकृतिले कसैलाई पक्षपात गर्दैन । बिना सम्भोग कसैको पनि जन्म हुन सक्तैन । यस्तो हुनै नसक्ने कुरामा उनीहरू यस्तो भएकै हो भनेर दावा साथ भन्ने गर्छन् ।

कुमारी आमाबाट बिना यौन सम्बन्ध कसरी बच्चा जन्मन सक्छ? संसारमा जति पनि प्राणीहरू जन्मेका छन् ती सबै यौन संसर्गबाटै जन्मेका हुन्छन् । हो, कुनै कुनै जीवहरूको शरीर टुक्रिएर नयाँ जीव जन्मदा अमीवा जस्तो एककोषीय जीवले बच्चा जन्माउने अलग प्रक्रिया छ । पंक्षीहरू फुलद्वारा नयाँ बच्चा पैदा गर्छन् । मयुरले भालेको विर्य खाएर बच्चा पैदा गर्छ । यसरी केही प्रणीमा अलि फरक प्रक्रिया छ । तर हरेकमा

साझा कुरा के छ भने जन्मनका लागि यौन सम्बन्ध हुनैपर्छ । भाले र पोथीको तत्त्वको मिलन हुनुपर्छ ।

जनावरहरूमा मात्र नभएर बोटविरूवाहरूको पनि भालेपोथी हुन्छ । संसारमा जति पनि नयाँ बच्चा पैदा हुन्छन् ती सबै भाले पोथीको मिलनबाट नै जन्मेका हुन्छन् ।

जिसस मात्रै कसरी भालेको बिना पोथीबाट मात्रै जन्मन सक्छन्? अनि क्रिश्चियन पादरीहरूले किन यस कुरालाई अति गौरवका साथ दावा गरिरहेका छन्?

उनीहरूको धारणा यस्तो छ कि जिससलाई पोथीबाट मात्रै जन्मेको भाले बिना जन्मेको देखाएर उनीलाई अरू भन्दा विशेष देखाउन सकिन्छ र उनको महत्त्व बढाउन सकिन्छ ।

मानिसहरूले विश्वास गरिन्जेलसम्म जिससलाई कुमारी मेरियनबाट जन्मेको बताएर उनको महत्त्व बढाइरहन्छ, तर मानिसहरूले विश्वास नै नगरिदिएपछि जिससको महत्त्व बढ्ने होइन बरू त्यहि कारणबाट मनिसहरू जिससबाट झन टाढा हुन थाल्छन् । यो कुरा पादरीहरूले बुझ्न सकिरहेका छैनन् ।

जिससलाई पवित्र पुरूषको रूपमा देखाउनका लागि उनलाई पवित्र स्त्रीबाट जन्मेको देखाउनु पऱ्यो । पवित्र महिला भनेको त्यो हो जो कसैसँग संभोग गरेकी हुँदैन । यहि आधारमा जिससलाई कुमारी मेरियमबाट जन्मेको दावा गरिन्छ ।

जिससलाई कुमारी मेरियमबाट जन्मेको देखाउनुका पछाडि केहि आधारभूत मान्यताहरू देखिन्छन् । पहिलो मान्यता यस्तो देखिन्छ कि कुमारी स्त्री पवित्र हुन्छिन् र संभोग गरेकी स्त्री अपवित्र हुन्छिन्? के संभोग अपवित्र चिज हो संभोग नगरी बस्नु नै पवित्रता हो त?

वाइवलको मान्यता छ कि संभोग अपवित्र हो । त्यसैले जिसस जस्ता ईश्वरका पुत्र त्यस्तो अपवित्र माध्यमबाट पैदा हुन सक्तैनन् । उनलाई जन्माउन पवित्र माध्यम प्रयोग गरिनुपर्छ । त्यहि मान्यताका आधारमा जिससलाई कुमारी मेरियमबाट जन्मेको देखाइएको छ ।

अर्को आधारभूत मान्यता यो छ कि भगवान्का लागि सबै कुरा संभव छ । भगवान्ले चाहेमा नियम तोड्न सक्छन् । त्यसैले जिसस जस्ता व्यक्तिलाई जन्मन आम सामान्य मान्छेहरूलाई लाग्ने नियम लाग्दैन । त्यसैले उनले ढुकुरको रूपमा कन्या मेरियमको गर्भमा प्रवेश गरे ।

यो कुरा पनि त्यति विश्वास गर्न सकिने कुरा होइन । जिसस यदि भगवान् नै हुन भने, उनको लागि जेन् पनि सम्भव छ भने कुमारी स्त्रीको गर्भमा नै किन प्रवेश गर्नु परेको । यतिकै डाइरेक्ट आकाशबाट फुत्त झरेर पृथ्वीमा आएको भए भइहाल्दथ्यो ।

भगवान्को लागि जे पनि संभव छ भने त्यसो गर्न पनि संभव थियो होला । उनले कुमारी मेरियमलाई किन त्यत्रो दुःख दिनु परेको? त्यतिकै आकाशबाट धर्तिमा झरेर– "ल म आएको छु । म आकाशबाट धर्तिमा झरेको भगवान्को पुत्र हुँ" भनिदिएको भए भइहाल्दथ्यो नि? यस्तो प्रश्न पनि त उठ्न सक्छ ।

त्यसैले जिसस कन्या मेरियमबाट जन्मेको देखाउनु पछाडिका आधारभूत मान्यताहरू नै गलत छन् ।

जिससलाई कन्या मेरियमबाट जन्मेको देखाउनुको उद्देश्य– उनको महत्त्व बढाउनु हो । जिससलाई महत्त्वपूर्ण र विशेष

देखाउनका लागि त्यस्तो कथा बनाइएको हो । तर यस विषयमा पनि प्रश्न उठाउन सकिन्छ ।

के कुनै व्यक्ति कन्याबाट जन्मिदैमा महत्त्वपूर्ण हुन्छ? पहिलेका अचेतनशील र अन्धविश्वासी युगमा यस धारणाले काम गऱ्यो होला, तर आजको चेतनशील युगमा यस मान्यतालाई दोहोऱ्याइरहनुको कुनै अर्थ छैन ।

त्यसो भए अर्को प्रश्न उठ्न सक्छ यदि जिसस कन्या मेरियमबाट जन्मेको भन्ने कुरा हामी स्वीकार गर्दैनौं भने के जिससको महत्त्व कम हुन्छ ?

कुनै व्यक्तिले जिसस कुमारी मेरियमबाट जन्मेका हुन् भनेर स्वीकार गर्छ भने उसले जिससलाई मानेको ठहंरिने र कुनै व्यक्तिले जिसस कन्या मेरियमबाट जन्मेको कुरा अस्वीकार गर्छ भने उसले जिससलाई नमानेको ठहरिन सक्तैन ।

त्यसो भए अर्को प्रश्न उठ्न सक्छ यदि जिसस कन्या मेरियमबाट जन्मेका हुन् भन्ने कुरा हामी स्वीकार गर्दैनौं भने के जिससको महत्त्व कम हुन्छ?

कुनै व्यक्तिले जिसस कुमारी मेरियमबाट जन्मेका हुन् भनेर स्वीकार गर्छ भने उसले जिससलाई मानेको ठहरिने र कुनै व्यक्तिले जिसस कन्या मेरियमबाट जन्मेको कुरा अस्वीकार गर्छ भने उसले जिससलाई नमानेको ठहरिन सक्तैन ।

जिसस कुमारी मेरियमबाट जन्मेका हुन् भन्ने कुरा अस्वीकार गर्दैमा जिससको महत्त्व कम हुने होइन ।

वाइबलका यस्ता अन्धविश्वासी कथाहरूलाई नमान्ने तर जिसस र वाइबललाई मान्ने कैयौं बुद्धिजीवीहरू पनि छन् । उनीहरू चर्च जाँदैनन् । चर्चका पादरीहरूलाई टेर्दैनन् पनि । जिसस कन्याबाट जन्मेको कुरामा विश्वास पनि गर्दैनन् । तर

जिससलाई औधि मान्छन् । जिससलाई सम्मान गर्छन् । वाइवललाई आदर गर्छन् ।

जिससलाई मान्नका लागि जिसस कुमारी मेरियमबाट जन्मेको कुरामा विश्वास गर्नैपर्छ भन्ने छैन । वाइबललाई सम्मान गर्नका लागि मूर्ख पादरीहरूको पत्यार लाग्छ । प्रवचन सूननैपर्छ र चर्च जानैपर्छ भन्ने छैन ।

हरेक शनिबार या आइतबार चर्चमा गएर प्रवचन गर्ने पादरी या प्रत्येक प्रत्येक शनिबार चर्चमा प्रार्थनाको लागि जाने मूर्ख क्रिश्चियनले भन्दा चर्च नगएको र पादरीको प्रवचन नसूनेको स्वतन्त्र रूपले वाइबल अध्ययन गरिरहेको व्यक्तिले सायद धेरै कुरा बुझ्ेको हुन सक्छ ।

स्वतन्त्र रूपले अध्ययन गर्ने व्यक्तिले जिसस कन्या मेरियमका पुत्र नभएर अविवाहित मेरियमका बच्चा हुन सक्ने कुरामा विश्वास गर्न चाहिं सक्छन । तर बिना संभोग कोही जन्मन्छ भन्ने कुरा उ विश्वास गर्न सत्तैन ।

यदि जिसस भर्जिन वा कुमारी मेरियमबाट जन्मेका हुन् भने त्यसको अर्थ यस्तो हुनसक्छ कि भर्जिनको अर्थ संभोग नगरेकी पवित्र भन्ने नभएर हृदयको पवित्रतालाई संकेत गरेको हुन सक्छ ।

जिसस जस्ता प्रतिभाशाली पुत्र जन्माउन सक्ने महिला पक्कै पनि कुनै साधारण महिला हुन सक्तिनन् । उनी सायद हृदयकी पवित्र महिला हुन सक्छिन् । कुनै असाधारण महिलाले नै जिसस जस्ता महान् पुरूष पैदा गर्न सक्छिन् । यसै कुरालाई जिससको जन्म भएको कथा बनाइएको हुन सक्छ ।

यस अर्थमा मेरियम कुमारी हुन सक्छिन् । कुमारीको अर्थ पवित्र पनि हुन्छ । हृदयको पवित्रता हुन सक्छ ।

मेरियमलाई कुमारी भन्नुको अर्थ उनको यो शारीरिक स्वामित्वको कुरा होइन, उनको मानसिक र हृदयको कुमारीत्वको कुरा हुन सक्छ ।

उनी यति दयालु र करूणावान थिइन् होली त्यहि करूणा र दया पुत्रमा पनि आएको हुन सक्छ । उनी रीस, क्रोध, लोभ, मोहबाट मुक्त थिइन होली त्यसैले उनको पुत्र पनि त्यस्तै पैदा भए । रीस क्रोध लोभ, मोह जस्ता मनोविकारबाट मुक्त हृदय पक्कै पनि कुमारी हृदय हो । दया र करूणाले भरिएको हृदय पक्कै पनि कुमारी हृदय हो ।

रीस क्रोध लोभ मोहको फोहोर जमेर दया र करूणाहीन हृदयलाई कुमारी हृदय भन्न सकिदैन ।

हिन्दू शास्त्रमा अहिल्या, मन्दोदरी, तारा, कुन्ती, द्रौपदीलाई पन्चकन्या भनिन्छ । उनीहरूलाई कन्या भन्नुको पछाडि के उद्देश्य हुनसक्ला?

कन्या भनेको त संभोग नगरेको महिलालाईजनाउने शब्द हो । तर यिनीहरूले संभोग नगरेको त कुरै छाडिदिउँ बिहे गरेर बच्चा पनि पाइसकेका थिए । यति हुँदाहुँदै पनि तिनीहरूलाई कन्या भनिन्छ ।

उनीहरूलाई कन्या भन्नु र मेरियमलाई कुमारी उस्तै उस्तै कुरा हो ।

उनीहरूलाई कन्या भन्नुको अर्थ शारिरिक रूपमा संभोग नगरिएको अर्थमा नभएर उनीहरूको मानसिक र हृदयको पवित्रतालाई नै संकेत गर्न भनिएको हो ।

हुन त हिन्दू शास्त्रले पनि एउटा बेतुकको तर्क बताउँछ । हिन्दू शास्त्र र हिन्दू पण्डितहरूकाअनुसार यी पञ्चकन्याहरूलाई यस्तो वर प्राप्त थियो कि जतिपटक संभोग गरे पनि संभोगपछि

उनीहरूको कुमारीत्व फेरि जोडिन्थ्यो । संभोगको क्षणमा तोडिएको योनिच्छेद फेरि जोडिन्थ्यो । त्यसैले तिनीहरूलाई कन्या भनिएको हो । अर्थ न वर्थको तर्क दिइन्छ । यसरी योनिच्छेद च्यातिने र जोडिने यस्तो हुनु कुनै संभव कुरा होइन । तर यस अर्थमा उनीहरूलाई कन्या भनिएको होइन । उनीहरू कन्या त हुन् मानसिक रूपमा, हृदयको रूपमा, शारिरिक रूपमा होइन ।

मेरियमका पुत्र जिसस भए जस्तै पञ्चकन्याका पनि उस्तै मेधावी र पवित्र पुत्र पैदा भएका थिए ।



# जिसस क्राइष्टको अर्थ

'जिसस' शब्दको अर्थ हुन्छ- आश्चर्य ! जिसस अर्थात् आश्चर्य ।

जीसस क्राइष्टको शुरूको नाम बेग्लै थियो । त्यो नाम के थियो भन्ने कतै पनि उल्लेख छैन । जिससलाई सबैले जिसस भनेर बोलाउँदा त्यो शुरूको नाम नै मानिसहरूले बिर्सिदिए ।

शुरूको नाम हटाएर उनलाई किन जिसस क्राइष्ट मानिन थालियो त? भन्ने प्रश्न उठ्न सक्छ ।

जिससको सन्दर्भमा मात्र नभएर सबै धर्मगुरूहरूको जीवनमा जब कुनै दैवी अनुभवको घटना घट्छ र उनीहरू नयाँ व्यक्ति बन्छन् तब उनीहरूको नाम पनि नयाँ पाउँछन् ।

गौतम बुद्धको शुरूको नाम सिद्धार्थ गौतम थियो । उनलाई पहिले सिद्धार्थ गौतम भनिन्थ्यो, तर जब उनलाई ज्ञान प्राप्त भयो तब मानिसहरूले उनलाई बुद्ध भन्न थाले । बुद्ध त अरू पनि थिए त्यसैले अरूबाट उनलाई छुट्टै चिनाउन गौतम बुद्ध भन्न थालियो ।

जैन धर्मका प्रवर्तक महावीरको शुरूको नाम बर्धमान थियो पछि उनलाई महावीर भनिन थालियो ।

कुनै दैवी अनुभवबाट गुज्रिएपछि प्रत्येक गुरूको जीवन नयाँ जीवन बन्छ । नयाँ जीवनसँगै नाम पनि नयाँ मिल्छ ।

जिससले जब एक्काइस दिनसम्म पर्वतमा उपवास गरे तब उनलाई नयाँ अनुभव भयो, भगवान्को प्रसाद मिल्यो । उनले त्यो प्रसाद बजारमा गएर मानिसहरूलाई बताउन थाले । उपदेश गर्न थाले ।



जिससले निकै आश्चर्य लाग्दा कुराहरू गर्न थाले । उनका कुरा सूनेर मान्छेहरूलाई करेन्ट लाग्थ्यो । झटका लाग्थ्यो । जिसस परम्परावादी कुरा भन्दा उल्टा कुरा गर्दथे ।

जिसस विद्रोही थिए । क्रान्तिकारी थिए । उनी पूराना सडेगलेका रूढिवादी सोचहरूको खण्डन गर्दथे । पूराना गलत मूल्य मान्यताहरूको विरोध गर्दथे ।

जिससका कुराले मानिसहरूलाई आश्चर्यचकित पार्दथ्यो । त्यसैले मानिसहरूले उनलाई 'जिसस' अर्थात् आश्चर्यको नामले संबोधन गर्न थाले ।

सबैभन्दा पहिले कुनै व्यक्तिले जिससलाई जब जिसस भनेर संबोधन गर्‍यो तब जिससले भने- "तिमीले मेरा लागि एक शब्द चुन्यौ । मलाई ठिक नाम दियौ । जब मैले त्यो दैवी अनुभव गरें त्यो अनुभव साँच्चै नै आश्चर्यजनक अनुभूति थियो । मैले त्यस बेला ओहो ! भन्न पुगेको थिएँ । अचम्म र अनौठो अनुभूति थियो । त्यो अनुभूतिको नाम हो- जिसस । यस अनुभवको अनुभूतिकर्तालाई पनि जिसस भन्न नै ठिक हुन्छ ।"

जिससले चमत्कारहरू पनि गर्दथे । ती चमत्कार देखेर मानिसहरू झन अचम्मित हुन्थे र भन्थे- जिसस ।

जिससका वाणी आश्चर्यजनक मात्रै हुँदैनथे । उनका वाणीमा ईश्वरीय अनुभूति पनि झल्कन्थ्यो । उनी ईश्वरका कुरा गर्दथे ।

जिसस मानिसहरूलाई ईश्वरका वाणी सूनाउँथे । मानिसहरू उनमा ईश्वरीय गुण पाउँथे । त्यसैले मान्छेहरू उनलाई क्राइष्ट पनि भन्न थाले । जिसस करूणाका दयालु र क्षमाशील थिए । सहयोगी, दानी र करूणावान भएकोले उनलाई मानिसहरूले क्राइष्ट भन्न थाले ।

यसरी कसैले जिसस, कसैले क्राइष्ट, कुनै ठाउँमा जिसस कुनै ठाउँमा क्राइष्ट भनिदा पनि सबैजना एकै ठाउँमा भेला हुदाँ दुवै शब्द मिलाएर जिसस क्राइष्ट भन्न थालियो । यहि नामले मानिसहरूले उनलाई चिन्न थाले ।



# शिव भगवान्लाई मासु चढाउने भक्त

पौराणिक कालको कुरा हो । कण्णप्य नाम गरेको एउटा शिकारी थियो । नाम पनि अप्ठेरो- कण्णप्य । उसको काम अप्ठेरो शिकार गर्नु । जनावर मार्नु । उसको काम नै यहि थियो । विचार उसले के गरोस? बच्चादेखि नै उसले यहि काम सिक्यो । उसका बाउले उसलाई यही काम सिकाए । उसले अरू काम जानेको थिएन । जीवन निर्वाहको लागि एउटा काम त गर्नै पऱ्यो । उसले दैनिक शिकार गर्दथ्यो । शिकार गर्दा निष्काम भावले गर्ने गर्दथ्यो । भगवान्लाई सम्झेर शिकार गर्दथ्यो ।

उ ज्यादै दयालु थियो । शिकारी पनि कोही दयालु हुन्छ र? भन्ने प्रश्न उठ्न सक्छ । हो उ दयालु थियो । शिकारीहरू कठोर र निष्ठुर हुन्छन् भन्ने सोचिन्छ, तर प्राय: शिकारीहरू दयालु र कमलो मनका हुन्छन् ।

समाजका गृहस्थहरू बरू यति दयालु हुँदैनन् । तर शिकारीहरू दायलु हुन्छन् ।

आखिर किन त?

गृहस्थहरू भित्र क्रोध, रीस, ईर्ष्या जमेर बसेको हुन्छ । उनीहरूले आफूभित्र क्रोध, रीस र ईर्ष्यालाई फ्याक्ने मौका पाउँदैनन् । बरू गृहस्थ जीवनको नियम कानुनमा अल्झेर बस्नु पर्दा उनीहरू भित्र बेला बेलामा रीस उठ्छ र त्यो रीसलाई व्यक्त गर्न नसक्दा मन भित्र थुप्रिएर बस्छ ।

शिकारीहरू भित्रको क्रोध, ईर्ष्या र हत्या गर्ने चाहना शिकार गर्दा पूरा हुन्छ । यसले गर्दा उनीहरूको मन हलुका भएको हुन्छ । हलुका मनमा दयाको भावना ज्यादा हुन्छ ।

त्यसैले शिकारीहरू ज्यादा हलुका, ज्यादा दयालु र कमलो मनका हुन्छन् । गृहस्थहरूले भित्रको मनको मैलो पखाल्ने मौका पाउँदैनन् । उनीहरूको मनमा फोहोर जम्मा हुँदै थुप्रिदै जान्छ । जति क्रोध गऱ्यो, जति रीस गऱ्यो त्यति त्यो थुप्रिदै जान्छ ।

जुन व्यक्ति छिटो रिसाउँछ र आफ्नो रीस व्यक्त गरिहाल्छ उसको मन बढी हलुको हुन्छ कमलो हुन्छ । जो व्यक्ति बाहिर रिस देखाउँदैन, रिसलाई भित्रभित्रै दबाउँछ उ ज्यादा खतरनाक हुन्छ । उभित्र रीस जम्दै जम्दै जान्छ र कुनै दिन एक्कैचोटी बिस्फोट हुन्छ । यसरी एक्कैचोटी बिस्फोट हुँदा ज्यादा नोक्सान पुऱ्याउँछ ।

व्याधाहरूको स्वभाव छिटो रिसाउने र रिसलाई व्यक्त गरिहाल्ने स्वभावको हुन्छ । जसले गर्दा उनीहरूको मनभित्र रीस जम्न पाउँदैन । त्यसैले उनीहरू ज्यादा हलुका मनका हुन्छन् ।

कण्णप्य नामका शिकारी त अरू शिकारी भन्दा पनि ज्यादा शान्त, शित्तल, नरम र दयालु थियो । दयालु मान्छेले शिकारी पेशा किन गर्न परेको भन्ने लाग्न सक्छ । अनि दयालु मान्छेले जनावरको हत्या गर्न कसरी सक्छ? भन्ने प्रश्न पनि उठ्न सक्छ ।

हो, उसले जनावरलाई मार्दथ्यो, तर ईश्वरको नाम लिंदै, भगवान्सँग माफी माग्दै जनावर मार्दथ्यो । आफ्नो भोक भेटाउन मात्रै जनावर मार्दथ्यो । जनावर मार्दा अत्यन्तै दया पूर्वक मार्दथ्यो ।

अघि नै भनियो, यो उसको बाध्यता थियो । उसले अरू काम जानेकै थिएन । उसको यो पेशा बाबुबाजेका पालादेखि चल्दै आएको पुर्खौली पेशा थियो । पेट पाल्नै पऱ्यो ।

उसले जंगलका जनावरहरूलाई मारेपछि भगवान्मा मासु अर्पण नगरी कहिल्यै खाँदैनथ्यो । उ हरेक दिन बिहान र बेलुका सुत्नुअघि शिकारी देवताको प्राथाना गर्दथ्यो ।

एकदिन उ शिकार खेल्दै जंगलको निकै टाढासम्म पुग्यो । त्यहाँ उसले एउटा शिव मन्दिर देख्यो । साँझ पनि परिसकेकोले उसले त्यहि मन्दिरभित्र रात काट्ने विचार गऱ्यो ।

भोलिपल्ट बिहान उज्यालो भयो । उसले त्यहाँबाट हिड्ने बेलामा शिवजीको पूजा गरेर जाने विचार गऱ्यो । पूजाको लागि जंगलबाट फूलहरू टिपेर ल्यायो । फलहरू ल्यायो । शिवजीको मूर्तिमा फूल र फल चढायो । अनि आफूले हिजो शिकार गरेर ल्याएको जनावरको मासु पनि शिवजीलाई चढाइदियो र त्यसपछि बाँकी मासु शिवजीको प्रसाद मान्दै खान थाल्यो ।

उ मासु खाएर सकेपछि भरे बेलुकीको खानाको जोहो गर्न शिकारमा गयो ।

उ गएपछि त्यो मन्दिरको नित्य पूजा गर्ने पूजारी पनि त्यहाँ आइपुगे । उनले मन्दिरको शिवजीको मूर्तिमा टाउकोमा मासु चढाएको देखेर दंग परे । कुन मूर्खले शिवजीलाई मासु चढायो भनेर उनलाई रीस पनि उठ्यो । उनी रिसाउँदै मासु फालिदिए । शिवजीलाई चोखो पानी ल्याएर पखाले र आफ्नै तिरकाले पूजा गरेर फर्किए ।

भोलिपल्ट पनि पण्डितले मन्दिरको मूर्तिमा मासु चढाएको भेटे । यसरी नै तीन चार दिनसम्म मासु चढाएको देखेपछि यस्तो दुष्ट हर्कत कसले गरेको रहेछ भनेर जान्ने इच्छा ती पूजारीलाई भयो । अब लुकेर हेर्नुपऱ्यो भन्ने विचारले एक दिन बिहानै सबेरै मन्दिर आएर लुकेर मन्दिरको गतिविधि हेर्न थाले ।

पूजारीले कण्णप्यले पूजा गरिरहेको हेर्न थाले । त्यो दिन कण्णप्यले पनि मन्दिरमा अनौठो कुरा देख्यो । हिजो अस्तिको मन्दिरको मूर्ति भन्दा आजको मूर्ति फरक लाग्यो ।

मूर्ति यस कारणले फरक लाग्यो कि शिवको मूर्तिको दायाँ आँखाबाट रगत बगिरहेको छ । कण्णप्यले आँखामा हेर्छ त दायाँ आँखा फुटेको रहेछ । उसलाई यो देखेर दुःख लाग्यो । उसले सोच्यो- कुन दुष्ट आएर यो मूर्तिको आँखा फुटाएछ । उसले यताउति हेर्‍यो, तर कसैलाई देखेन । उसले आँखाको उपचार गर्न खोज्यो तर उसले कुनै मेसो नै पाएन । आँखाबाट निरन्तर रगत बगिरहेकै थियो ।

उसले के गर्ने के नगर्ने सोच्नै सकेन । अन्तमा आफ्नै दायाँ आँखा वाणले घोचेर निकाल्यो र शिवजीको मूर्तिमा त्यो आँखा फिट गर्‍यो अब रगत बग्न बन्द भयो । शिवजीको मूर्तिबाट रगत बग्न छोडेको देखेर उ निकै खुशी भयो ।

यता ती सबै दृश्य लुकिलुकि हेरिरहेका पूजारी दंग परे । कण्णप्यले आफ्नो आँखा फुटाउन लाग्दा उनलाई डर पनि लाग्यो ।

कण्णप्यले अति खुशी हुँदै फेरि शिवजीको मूर्तिमा पूजा गर्न थाल्यो र मासुको टुक्रा चढाउन लाग्दै थियो त्यसैबेला बायाँ आँखाबाट रगतको धारो बग्न थाल्यो । उसले हेर्छ, तर त्यो आँखा पनि फुटेको थियो । यो के हुँदैछ भन्ने सोचेर उ डरायो । किन आँखा फुटिरहेछ? उसले मनमनै प्रश्न गर्‍यो ।

उसले त्यो आँखाको उपचार गरेर रगत थमाउन खोज्यो तर रगत नथामिएपछि आफ्नै बायाँ आँखा घोचेर निकालेर त्यहि फिट गर्ने बिचारले आँखामा वाणले घोच्न थाल्यो । ठीक त्यही बेला शिव भगवान् प्रकट हुनुभयो र भन्नुभयो- "तिम्रो भक्ति देखेर

म खुशी भएँ । तिमीले आफ्ना आँखा दिन सम्म तयार भयौ । मलाई तिम्रो आँखा चाहिंदैन । तिम्रो आँखा फिर्ता लैजाउ । म तिमीलाई तिम्रो जीवन सफल हुने वरदान दिन्छु ।"

यति भनेर शिव भगवान् अन्तर्ध्यान हुनुभयो । यो सबै दृश्य लुकेर हेरिरहेको पूजारीले पनि शिवजीको यथार्थ स्वरूपको दर्शन पाए । उनले त वरदान पाएनन्, तर उनी पनि धन्य भए । शिवजीको रूपको दर्शन पाउने प्रत्येक व्यक्ति भाग्यमानी मान्नुपर्छ । वरदान नपाए पनि उहाँको दर्शन मात्र पाउनु पनि ठूलो कुरो हो । पूजारीले यही सोचे ।

पछि पूजारीले कण्णप्पलाई भेटे र उसको खुट्टामा ढोग्दे भने- "तपाईं यसरी नै सधैं आएर यस मन्दिरको पूजा गर्नुहोस् । यसरी नै मासु चढाइरहनु होला । तपाईंले गर्दा मैले पनि आज शिवजीको दर्शन पाएँ ।"

कण्णव्यले भन्यो- "के गरौं हजुर ! जोसँग जे छ भगवान्लाई त्यहि चढाउने हो । मसँग मासु मात्रै छ । म व्याधा हु । त्यसैले मसँग मासु मात्रै हुन्छ । मासु नै चढाउँछु । दुःख नमान्नुहोला ।"



# अत्रि ऋषिको कथा

सप्तऋषिहरूमा अत्रि ऋषिको पनि नाम समावेश छ । जति पनि अत्रि गोत्रका थरहरू छन् ती सबै अत्रि ऋषिका सन्तान मानिन्छन् । मिश्र, खतिवडा, ओझा जस्ता थर भएका मानिसहरू अत्रि ऋषिका सन्तान हुन् ।

अत्रि ऋषि र उनकी पत्नी अनुसूयाबाट जन्मिएका अत्रि गोत्रीय बन्धुहरूको लागि अर्को खुशीको कुरा पनि छ । यिनै अत्रि ऋषिकी पत्नी अनुसूयाको गर्भबाट ब्रह्मा, विष्णु र महेश्वरले पनि जन्म लिएका थिए । त्यसैले अत्रि गोत्रीय बन्धुहरूका लागि ब्रह्मा, विष्णु र महेश्वर पनि दाजुभाइ भए ।

महर्षि अत्रि ऋषि सम्पूर्ण मनोविकारबाट मुक्त थिए । उनलाई मोक्ष प्राप्त भएको थियो । उनी सत्व, रज र तम जस्ता त्रिगुणबाट पनि मुक्त थिए । काम क्रोध लोभ मोह मद मात्सर्य जस्ता षटरिपुबाट पनि उनी मुक्त थिए । अनुसूया पनि उस्तै थिइन् । यी दुवै पति पत्नी आफ्नो भुक्तावस्थामा लीन थिए । परमानन्दमा लिन भइरहन्थे ।

ब्रह्मालाई यस्ता पवित्र पति पत्नीबाट संसारको सृष्टिको क्रमलाई अगाडि बढाउनुपर्छ भन्ने लागेछ । उनी अत्रि ऋषिको आश्रममा आएर भन्न लागे- "हे महर्षि दम्पती ! तपाईंहरू जस्ता पवित्र आत्माबाट म पृथ्वीमा मनुष्यहरूको संख्या बढाउन चाहन्छु । त्यसैले तपाईंहरूले सन्तानहरूको जन्म दिनुपर्‍यो ।"

अत्रि ऋषिले भनेछन्- "हे प्रभु ! हे सृष्टिकर्ता ! हामीलाई सन्तानको चाहना छैन । हामी सम्पूर्ण चाहना इच्छाबाट मुक्त छौं । त्यसैले हामीबाट यो संभव छैन । त्यो तपाईं अरू नै व्यक्तिहरूको खोजी गर्नुहोस् ।"

ब्रह्माले फेरि भन्नुभयो- "हे महर्षि दम्पती ! मैले पृथ्वीको सृष्टि गरें । पृथ्वी रित्तो छिन् । खाली छिन् । म अब मानिसहरूको सृष्टि गरेर आवादी बनाउन चाहन्छु । त्यसको लागि पृथ्वीमा सदाचारी र असल मानिसहरू पठाउन चाहन्छु । सदाचारी र असल मानिसहरूले मात्र पृथ्वीको जतन गर्नेछन् ।

ब्रह्मा केही बेर रोकिएर फेरि भन्न थाले- "त्यसको लागि म तपाईंहरूको बिउ प्रयोग गर्न चाहन्छु । तपाईहरू पतिपत्नी दुवै पवित्र हुनुहुन्छ । तपाईंहरूबाट जन्मिएका सन्तानहरू असल र समझदार हुनेछन् । त्यसैले कृपया सन्तान पैदा गरिदिनुहोस् ।

महर्षि अत्रिले भने- "हे सृष्टिकर्ता ! मबाट यो संभव छैन । सन्तान पैदा गर्नका लागि पहिले 'इच्छा' हुनुपर्छ । इच्छाबाट नै कुनै पनि कुराको जन्म हुने हो । इच्छा र कामना नै शुन्य भएको व्यक्तिबाट कसरी सन्तान पैदा हुन्छ? त्यसैले हजुर दक्ष प्रजापतिकहाँ गएर उनलाई अह्राइबक्सियोस् । उनले यो काम गर्न सक्छन् ।"

यति भनेर अत्रि ऋषि तपस्यामा लीन भइदिए । ब्रह्मा गएर दक्ष प्रजापतिलाई आग्रह गर्न थाले । दक्ष प्रजापति केही भ्रष्ट देवता हुन् । उनैका सन्तान भएका हुनाले मानिसहरू भ्रष्ट भए ।

मानिसहरू भ्रष्ट भएर पृथ्वीलाई नोक्सान पुऱ्याउन लागेको देखेर ब्रह्मा आत्तिन थाले । केही असल मानिसहरू पनि पैदा गर्नुपर्छ र त्यसको लागि अत्रि ऋषिलाई नै मनाउनुपर्छ भन्ने सोचेर उनी फेरि अत्रि ऋषिको आश्रममा पुगे । तर यस पटक उनी एक्लै गएनन् । आफूले मात्र सम्झाउँदा अत्रिले नमानेको देखेर उनले विष्णु र महेश्वरलाई पनि साथै लिएर गए ।

यी तीन महान् भगवान्हरू आफ्नो आश्रममा आएको देखेर अत्रि र अनुसूया धेरै प्रसन्न भए । भगवान्हरूको यथोचित

सत्कार गरेपछि अत्रि ऋषिले भगवान्हरू आउनुको कारण सोधे ।



ब्रह्माले भने– "हे अत्रि ! मैले तिमीलाई पहिले पनि आग्रह गरेको थिएँ– सन्तान जन्माउन पऱ्यो भनेर, तर तिमीले मानेनौ । मैले दक्ष प्रजापतिलाई त्यो काम गर्न लगाए । तर दक्ष प्रजापतिको बिउ भ्रष्ट रहेछ । त्यस बिउबाट पृथ्वीलाई नोक्सान पुऱ्याइरहेको छ । त्यसैले त्यहाँ केही असल मानिसहरू

पठाउनुपर्ने भयो ताकि ती भ्रष्टहरूलाई ती असलहरूले सुधार्नेछन् ।"

ब्रह्माको कुरा रोक्दै विष्णु र महेश्वरले एकसाथ भने- "त्यसैले तिमीले सन्तान जन्माइदिनु पर्‍यो भन्नका लागि हामी तीनैजना तिम्रो आश्रममा आएका हौं ।"

यसरी त्रिदेवले आफ्नो आश्रममा आएर आग्रह गरेपछि अत्रिले हार्न सकेनन्, उनले भने- "हे त्रिदेव ! यदि मैले सन्तान जन्माउने हो भने पहिलो सन्तानको रूपमा तपाईंहरूले जन्म लिनुपर्नेछ । यदि त्यसो हुन्छ भने म सन्तान जन्माउनेछु अन्यथा म जन्माउन असमर्थ छु ।"

त्रिदेवले यो कुरा स्वीकार गरे ।

केही वर्षपछि महर्षि पत्नी अनुसूयाको गर्भबाट ब्रह्माको चन्द्रमा, दात्तात्रेय र दुर्वासालाई जन्म दिइन् । चन्द्रमा ब्रह्माको अंश हुन् त्यसैले उनमा ब्रह्माको लक्षण र गुणहरू छन् ।

दत्तात्रेय विष्णुको अंश हुन्, त्यसैले उनमा विष्णुको गुण छ । दुर्वासा महेश्वरका अंशको रूपमा आएकोले उनी महेश्वरको गुण बोकेर आए, दुर्वासा अत्यन्तै छिटो रिसाउँछन् । यो गुण महेश्वरको गुण हो ।

त्रिदेवको दर्शन पाउन मानिसहरू मात्र होइन ऋषिहरू र देवताहरू पनि कैयौं वर्ष तपस्या गर्नुपर्छ । तर अत्रि ऋषि र अनुसूयाले भने त्रिदेवलाई आफ्नै आश्रमको आगनमा बाललीला गर्दै खेलिरहेको देख्यो । यस्तो देख्दा उनीहरूलाई अत्यन्तै हर्ष हुन्थ्यो ।

यसरी सम्पूर्ण अत्रि गोत्रिय बन्धुहरू त्रिदेवका पनि बन्धु हुन् पुगे । यो उनीहरूका लागि गौरवको कुरा हो ।



# गुरुभक्त उद्दालक

उद्दालकको शुरूको नाम अरूणी थियो । उनी त्यसबेलाको चलनअनुसार सानै उमेरमा आश्रममा पढ्न बसेका थिए । उनी ज्यादै नै अनुशासित र गुरूभक्त थिए । गुरूको सेवा, सत्कार, आदर गर्ने कुनै कसुर राख्दैनथे । उनी लगनशील र मिहीनेती पनि थिए ।

वर्षाको समयको कुरा हो । एक दिन ठूलो पानी परेर खोलाहरूमा बाढी आउन थाल्यो । बाढीले गर्दा खेत बगाउने हो कि भन्ने डर भयो । आश्रमको आफ्नो खेत थियो । त्यो खेत बगाउने हो कि भन्ने डरले धौम्यले अरूणीलाई खेतको पानीको मुहान थुन्न भनेर पठाए । आधा रातको समय थियो । गुरूले आज्ञा दिएपछि कति पनि आनाकानी नगरी अरूणी खेततर्फ गए । बाटोमा ठूलो खोलो तर्नुपर्दथ्यो । खोलामा बाढी आएको थियो, तैपनि ती किशोर शिष्यले खोलो तरे । खेतमा पुगे र खेतको मुहानको पानी थुन्न खोजे । तर जति थुन्न खोज्दा पनि मुहान थुन्न सकेनन् । खोलाको पानी जाने बाटो थुनिएको रहेछ । खेततर्फ जाने कुलो होचो र फराकिलो भएकोले खोलाको सबै पानी खेततर्फ जान खोज्दथ्यो । उनले जति माटो हाले पनि थुन्न सकेनन् । जति माटो हालेर थुने पनि पानीले माटो बगाईदिन्थ्यो ।

उनी त्यत्तिकै फर्कन सकेनन् । गुरूले लगाएको काम जसरी पनि सम्पन्न गर्नुपर्ने थियो । त्यसैले उनले धेरै प्रयास गरेर मुहान थुन्न खोजे । निकै माटो ल्याएर हाले, तर पानीको बहाव यति तिव्र थियो कि थुन्न कठिन भयो ।

केही सीप नलागेपछि उनी आफै सुतेर पानीको बाटो बन्द गरिदिए । यसरी उनले खेतलाई बाढीले बगाउन बाट जोगाए ।

राती खेतमा गएको अरूणी बिहानसम्म पनि नफर्केका देखेर गुरू आयोद धौम्य आत्तीन थाले । सायद आरूणीलाई कुनै संकट पो आयो कि भन्ने सोचेर बिहान हतार हतार अरू चेलाहरूलाई लिएर उनी खेतको मुहानमा पुगे । मुहानमा गएर हेर्दा त सबैजना दंग गरे । अरूणीले आफै सुतेर मुहानबाट खेतमा पस्ने बाढीलाई रोकिरहेका थिए ।

गुरूले सोधे- "के भयो अरूणी तिमीलाई? किन आफै यसरी मुहानमा बसेर पानी रोकेको?"

अरूणीले भने- "गुरू ! यहाँको माटो बलौटे र कमलो भएकोले जति माटो राखेर पानीलाई थुन्न खोजे पनि पानी थुनिएन । माटो बगाउँथ्यो र पानी खेततर्फ नै बग्दथ्यो । ढुंगा पनि पाइएन । त्यसैले म आफैं सुतेर खोलाको बाढी छेकेको ।"

गुरूले भने- "मलाई तिम्रो यो मिहिनेत र समर्पण देखेर खुशी लाग्यो । म तिमीदेखि प्रसन्न भएको छु । तिम्रो गुरूभक्तिको यो उदाहरणपछिसम्म पनि मानिसहरूले सम्झिरहनेछन् ।"

गुरूले अरू चेलाहरूलाई ढुंगाहरू खोजेर ल्याउन लगाए । तराईको ठाउँ भएकोले ढुंगाहरू जहाँतहीं सजिलै पाइदैनथ्यो । चेलाहरूले टाढा टाढाबाट ढुंगाहरू खोजेर ल्याए ।

अरू शिष्यहरूले ढुंगाहरू खोजेर ल्याएपछि धौम्य गुरूले ढुंगा र माटो राखेर मुहान थुन्ने काम गरे । अरूणीलाई आश्रममा ल्याएर तातो झोल पदार्थ खान दिए ।

रातभरी पानीमा भिजेको हुनाले उनलाई चिसो लागेको थियो । उनलाई तातो खानेकुरा खान दिएर आराम गर्न लगाईयो ।

यिनै अरूणीपछि उद्धालकका नामले चर्चित भए ।

त्यो दिनदेखि गुरूले उनलाई विशेष ध्यान दिएर सिकाउन थाले । गुरूलाई विश्वास थियो कि यो चेलोपछि गएर ठूलो काम गर्न सक्छ । यस चेलोमा ठूलो सम्भावना छ भन्ने उनलाई लाग्यो । त्यसैले उनलाई विशेष तवरले सिकाउन थाले ।

अरूणी पनि निकै मन लगाएर अध्ययन गर्न थाले । गुरूको माया पाएर उनी झन् झन् मिहिनेत गर्दै गए । पछि उनी वेदान्त शास्त्रका ठूला विद्वान् बन्न पुगे । उद्दालकका नामले चिनिन थाले ।



# काशी कसरी वाराणसी भयो?

वाराणसीको पूरानो नाम हो काशी । अझै पनि धेरै मानिसहरू वाराणसीलाई काशी नै भन्दछन् । वाराणसी भन्न अप्ठेरो लाग्नेहरू वाराणसीलाई बनारस पनि भन्दछन् ।

काशीलाई कसरी वाराणसी भन्न थालियो भन्ने सन्दर्भमा भगवान् कृष्णसँग जोडिएको एउटा कथा छ ।

मगधको राजा जरासन्ध धेरै शक्तिशाली राजा थियो । उसले पटक पटक स्वर्गका राजा इन्द्रलाई समेत हराएर आफ्नो अधीन गरेको थियो । उसका अनेकौं शस्त्र-अस्त्रहरू र शक्तिशाली सैनिकहरूको कारण सबै राजाहरू उसँग लडाइँ गर्न डराउँथे । उसका दुई छोरीहरू थिए । ती छोरीहरूको बिहे उसले मथुराको राजा कंशसँग गरिदिएको थियो ।

ज्वाईं ससुरा एउटै स्वभावका थिए । दुवैजना दुष्ट किसिमका थिए । जस्तो ससुरो उस्तै ज्वाईं । जस्तो जरासन्ध उस्तै कंश । जरासन्धले मगधका जनतालाई सताएको थियो भने मथुरामा कंशले आफ्ना जनतालाई दु:ख र पिडा मात्र दिएको थियो । जनताबाट बढी कर उठाउने, राज्यको विकासमा ध्यान नदिने, राज्यको ढुकुटी रित्याउने, आफ्नो बिलासी जीवनका लागि खर्च गर्ने, जनताको पिर-मर्का नबुझ्ने यस्तो कंश देखेर जनता दु:खी थिए । सबै मथुरावासी यस दुष्ट कंशबाट मुक्ति चाहन्थे ।

यस्तैमा कृष्णले कंशको हत्या गरेर जनताको इच्छा पूरा गरिदिनुभयो । अब मथुरावासी जनता खुशी भएका थिए । उता मगधको राजा जरासन्धले आफ्नो ज्वाईं मारिएको खबर सूनेर रिसायो । उसले कृष्णसँग आफ्नो ज्वाईंको हत्याको बदला लिने

बिचार गरेर कृष्णमाथि र मथुरामाथि आक्रमण गऱ्यो । तर कृष्णले उसलाई हराइदिनुभयो ।

कृष्णबाट हार खाएपछि जरासन्धले फेरि मौका पारेर आफू बलियो बनेर कृष्णमाथि आक्रमण गर्ने विचार गऱ्यो । उसले सेनालाई तालिम दियो । थप हातहतियारहरू बनायो । अरू छिमेकी राजा काशीका राजासँग पनि मद्दत माग्यो र कृष्ण र मथुरामाथि फेरि आक्रमण गऱ्यो । घमासान युद्ध भयो । यसपटक पनि जरासन्धको हार भयो । जरासन्ध बल्ल बल्ल भागेर बाँच्न सफल भयो । काशीका राजाको मृत्यु भयो । कृष्णको हातबाट उ मारियो ।

काशीका राजा मारिएपछि उसको छोरो काशीको राजा भयो । उसले कृष्णसँग आफ्ना पिताको हत्याको बदला लिन खोज्यो । उसले आफ्नो शक्ति बढाउने उद्देश्यले भगवान् शिवको तपस्या गर्न थाल्यो । भगवान् शिव खुशी भएर वरदान माग्न भने । उसले वर माग्यो- "हे भोलेबाबा ! म कृष्णलाई मार्न सकौं ।"

शिवले यस्तो वरदान दिन नमिल्ने बताउनुभयो । त्यसपछि उसले अर्को वर माग्यो, तर जुनसुकै वरको उद्देश्य पनि कृष्णलाई मार्नु नै थियो । उसले मागेका वरदान दिन नमिल्ने बताउँदै शिवले उसलाई आफैले एउटा कृत्या निर्माण गरेर त्यो उसलाई दिदै भन्नुभयो- "तिमी यसलाई जुन दिशामा पठाउँछौ उही दिशाको राज्यलाई खरानी बनाउनेछ ।"

यस्तो कृत्या पाएर उ निकै खुशी भयो । यसले कृष्णको मथुरा खरानी बनाउँछु भन्ने उद्देश्यले फुरुक्क पर्दै जाने आँटेको थियो कि शिवले भन्नुभयो- "तर एउटा कुरा ख्याल राख, यो कृत्या ब्राह्मणमाथि चाहि प्रहार नगर्नु । यदि ब्राह्मणमाथि प्रहार

गऱ्यौ भने यो उल्टो तिमीतिरै फर्कने छ र तिम्रो राज्य खरानी पार्नेछ ।"

उसले यो शर्तलाई खासै याद गरेन । उसलाई त जसरी भए पनि मथुरा खतम पार्छु भन्ने विचारले मनलाई अन्धो बनाइ दिएको थियो । उसलेपछिको कुरालाई ध्यान दिंदै दिएन ।

उसले आफ्नो सेनामेना तयार पाऱ्यो । आफ्नो साथी जरासन्धलाई पनि बोलायो र ठूलो हुँकार मच्चाउँदै मथुरामाथि जाइलाग्यो ।

मथुरावासीमा हाहाकार मच्चियो । उसले श्रीकृष्णलाई भेट्ने बित्तिकै केही बेर युद्ध गरेर कृत्या फ्याक्ने विचार गर्दै थियो । कृत्या फ्याँकेर सम्पूर्ण मथुरा र मथुरावासीलाई खरानी पार्छु भन्ने सोचेको थियो ।

श्रीकृष्णलाई देखेपछि उनीहरूबीच घमासान लडाइँ भयो । लडाइँमा श्रीकृष्णसँग हार्ने जस्तो भएपछि काशी राजाको पुत्रले शिव भगवान्‌बाट पाएको कृत्या श्रीकृष्णतर्फ प्रहार गऱ्यो ।

उसले सोचेको थियो कि अब सम्पूर्ण मथुरा खरानी हुनेछ । तर उसले सोचेजस्तो भएन । श्रीकृष्णले आफ्नो सुदर्शन चक्र कृत्या माथि प्रहार गर्नुभयो । सुदर्शन चक्रलाई देखेर कृत्याले चिनीहाल्यो कि यो सुदर्शन चक्र ब्राह्मणभक्त हुन् । अब यसले उल्टो काशीतिरै फर्केर सम्पूर्ण काशीलाई खरानी बनाइदियो ।

यसरी काशीको विशाल सहर र राज्य खरानीमा परिवर्तन भयो ।

धेरै लामो समयपछि श्रीकृष्णले भन्नुभयो यो काशीको माटो र हावापानी राम्रो छ । नदीहरू पनि छन् । पानीको सुविधा छ । त्यहाँ फेरि सहर बसाउनुपर्छ । त्यसैले उहाँ आफ्ना केही भक्तहरू लिएर काशीमा जानुभयो ।

काशीमा वरूणा र अस्सी नामका दुई नदीहरू थिए । ती नदीको बीच भागमा केही घरहरू बनाएर आफ्ना भक्तहरूलाई राख्न थाल्नुभयो ।

वरूणा र अस्सी नदीको बीचमा बस्ती शुरू भएकोले मानिसहरू त्यो ठाउँलाई वरूणा र अस्सी भन्न थाले । वरूणा र अस्सी भन्दाभन्दै वरूणअसी भन्न थाले ।

विस्तारै विस्तारै वरूणअसीबाट बरूणासी र पछि वाराणसी भन्न थाल्यो । आजभोलि त वाराणासी पनि नभनेर बनारस भन्न थालेका छन् ।

वरूण र अस्सी नदीको बीच भागमा कृष्णका भक्तहरू बस्दाबस्दै अरू मानिसहरू पनि त्यहि नजिकै आएर बस्न थाले । त्यहाँको सुविधा, मलिलो माटो र राम्रो हावापानी देखेर अरू मानिसहरू पनि थपिंदै गए । हुँदाहुँदै केही समयभित्रै त्यहाँ ठूलो शहर बन्न पुग्यो ।

त्यस बेलादेखि त्यहाँको जनसंख्या बढिरहेको छ । मानिसहरू थपिरहेका छन् । मानिसहरू थपिनै रहेका छन् ।

पछि त त्यो एउटा पवित्र भूमिको रूपमा विकसित हुन थाल्यो । त्यहाँ मरेपछि सिधै वैकुण्ठ पुगिन्छ भन्ने मान्यताले धेरै मानिसहरू जीवनको आखिरी समयतिर त्यहिं गएर बस्न थाले ।



# राजा बलीको कथा

राजा बली अत्यन्तै प्रसिद्ध राजा हुन् । उनी भक्त प्रह्लादका नाति हुन् । उनी दैत्य हुन् । दैत्यहरूका राज भए पनि उनी अरू दैत्यहरू जस्ता कपटी, दुष्ट र अन्यायी थिएनन् ।

राजा बली ज्यादै न्यायप्रेमी, असल र प्रजाहरूको भलो गर्ने राजा थिए । उनी भगवान्मा विश्वास गर्दथे । उनी अत्यन्तै दानी स्वभावका थिए । दैत्य भएर पनि यति असल दैत्य अरू भएनन्, प्रह्लाद बाहेक ।

एकपटक दैत्यहरू र देवताहरूबीचमा ठूलो युद्ध भयो । राजा बली दैत्य जातिका भएकाले उनले आफ्नै जातिको पक्षमा लड्नु पर्‍यो । उनी धर्मात्मा मात्रै होइनन्, अत्यन्तै शक्तिशाली पनि थिए । उनको शक्तिकै कारणले गर्दा दैत्यहरूले देवताहरूलाई लडाइँमा हराए ।

अब स्वर्ग, मर्त्य र पाताल तीनवटै लोक राजा बलिको अधीनमा आयो । स्वर्गका देवताहरू बस्ने ठाउँ नपाएर बरालिन थाले । भट्किएर कोही कतै कोही कतै भए । देवताहरूले यो दुःख पाएको देखर उनीहरूकी माता अदितीलाई असैह्य भयो ।

आफ्ना छोराहरूले पाएको यो दुःखबाट छुटकारा दिने उद्देश्यले उनले भगवान् विष्णुको तपस्या गर्न थालिन् । भगवान् खुशी हुनुभयो र प्रकट भएर वर माग्न भन्नुभयो ।

अदितीले वरदान माग्दै भनिन्- "हे प्रभु ! हे यस सृष्टिका पालनकर्ता ! मेरा छोरा देवताहरूले असाध्यै दुःख पाएका छन् । उनीहरूको राज्य दैत्यहरूले खोसेर लिएका छन् । त्यसैले मेरा छोराहरूको राज्य फिर्ता गरिदिनुहोस् । यसको साथै दैत्यहरू

पनि मेरै बहिनीका छोराहरू भएकाले उनीहरू पनि मेरै पुत्र समान हुन् । त्यसैले उनीहरूको पनि कुनै नोक्सान नहोस् ।

अदितीले यस्तो वरदान मागेको देखेर भगवान् विष्णु अत्यन्तै खुशी हुनुभयो र उहाँले- "तथास्तु" भनेर वरदान दिनुभयो ।

विष्णुले बैकुण्ठ फर्केर विचार गर्नुभयो- अब कसरी देतवताहरूको उद्धार गर्ने होला भनेर सोच्न थाल्नुभयो । त्यसैबेला उहाँले ध्यान दृष्टिले हेरेर थाहा पाउनुभयो कि दैत्यराज बलिले ठूलो यज्ञ गर्दैछन् र त्यस यज्ञमा जो जसले जे माग्छ त्यो दान दिने संकल्प गरेका छन् ।

विष्णु भगवान्ले यो कुरा थाहा पाउने वित्तिकै उहाँ अदितीको गर्भमा प्रवेश गर्नुभयो । अदितीको पुत्र हुर्कंदै गए । उहाँको नाम वामन राखिएको थियो ।

उहाँ हुर्केर जब युवक हुनुभयो त्यसैबेला बलिले ठूलो अश्वमेध यज्ञ गर्ने तयारी गरे । उनले ठूलो दान गर्ने संकल्प पनि गरे ।

भगवान् वामन बलि राजाको यज्ञशालातिर जानुभयो । वामनलाई देखेर दैत्यराज वलिले भने- "ब्राह्मण कुमार ! म हजुरको के सेवा गरौं? हजुर के दान लिने इच्छा छ भन्नुहोस् ।"

वामनले भन्नुभयो- "मैले सूनेको थिएँ तपाई जसले जे मागे पनि मागेको कुरा दिनुहुन्छ । यदि त्यसो हो भने म तपाईसँग तीन पाइला जमिन माग्छु ।"

के के न माग्न आटेको भनेको त जम्मा तीन पाइला जमिन । यति त म दिन सकिहाल्छु भन्ने सोचेर बलि राजाले गंगाजल लिएर तीन पाइला जमिन दिने संकल्प गरे ।

जब बलि राजाले संकल्प गरे त्यसैबेला वामन भगवान्‌को शरीर फैलिएर विशाल बन्न पुग्यो । उहाँको त्यो भयंकर विशाल रूप देखेर सबै डराउन थाले । विस्तारै उहाँले सम्पूर्ण विश्व ब्रह्माण्ड नै आफ्नो शरीरभित्र पार्नुभयो । त्यो विराट रूप देखेर सबै आश्चर्यचकित भए ।



भगवान् वामनको शरीर पाउ र हातहरूद्वारा सारा ब्रह्माण्ड ढाकिएपछि ब्रह्माले वामनको पाउ गंगाजलद्वारा धुनुभएको थियो । सारा देवताहरूले उहाँको स्तुतिगान गर्न थाले ।

भगवान् वामनले एक पाइला स्वर्गमा राख्नुभयो । अर्को पाइलाले पृथ्वी ढाकिदिनुभयो । तेस्रो पाइला राख्ने ठाउँ भएन । अब बलि राजा अप्ठेरोमा परे । अब तेस्रो पाइलाको लागि कुन जमिन दिने ।

बलि राजा आत्तिएर माफि माग्दै भगवान् वामनका शरणमा परे । वामन भगवान्ले बलिलाई– "तिमी पातालतिर जाउ" भनि आज्ञा गर्नुभयो ।

भगवान्को आज्ञालाई मानेर बलि राजा पातालतिर गए । भगवान् वामनले स्वर्ग देवताहरूलाई फिर्ता गर्नुभयो ।



# भिष्म पितामहको अन्तिम उपदेश

यो घटना महाभारतको समयको घटना हो । महाभारतको युद्ध समाप्त भइसक्न लागेको बेला तिरको कुरा हो । भिष्म पितामह अन्तिम सास फेर्दै थिए । श्रीकृष्णले अर्जुनलाई भिष्म पितामहबाट केही उपदेश लिन भनेर पठाउनुभयो ।

भिष्म पितामह जस्ता विद्वान् र ज्ञानीबाट अन्तिम समयमा उनका उपदेश सून्न अर्जुन मात्रै गएनन्, पाँच पाण्डव र द्रौप्रदी सबै गए । भिष्म पितामह तिनीहरूलाई नीति के हो? अनीति के हो? भन्नेबारे अनेकौं उपदेश गर्न थाले ।

भिष्म पितामहले दिएको उपदेश सूनेर द्रौपदी हाँस्न थालिन् । उनले आफ्नो हाँसो रोक्न खोज्दा पनि रोक्न सकिनन् । जति रोक्न खोज्यो झन् झन् हाँसो चर्को भयो ।

उनलाई हाँसेको देखेर भिष्म पितामहले सोधे– "हे द्रौपदी ! तिमी किन यसरी हाँसेकी ? तिम्रो हाँसोले मलाई अप्ठ्यारो लागिरहेछ ।"

द्रौपदीले भनिन्– "हे पितामह ! हजुरले मलाई यसरी हाँसेकोमा क्षमा गर्नुहोला । मैले हाँसो रोक्न खोज्दा पनि रोकिएन । मैले जानी जानी हजुरको अपमान गर्न हाँसेको पनि होइन । तर यो हाँसो आफै आयो ।"

पितामहले फेरि सोधे– "तिमी के कुरा सम्झेर हाँस्यौ त छोरी?"

द्रौतदीले भनिन्– "हे पितामह ! अहिले त तपाईं नीति र अनीतिका कुरा गर्नुहुन्छ । हामीलाई नीति, अनीति र धर्मबारे उपदेश दिनुहुन्छ, धर्मको पक्ष लिएर लड्नुपर्छ भन्नुहुन्छ । तर जब मलाई एउटा सभामा दुशासनले मेरो चीरहरण गरिरहेको थियो त्यसबेला तपाईं त्यहिं त हुनुहुन्थ्यो । त्यसबेला तपाईंले

चुपचाप बसेर हेरिरहनु भएको थियो । त्यसबेला तपाईंको यो नीति र अनीति कहाँ गएको थियो? तपाईं आफ्नै अगाडि यस्तो अनीति घटित भएको हेरिरहेको व्यक्तिले आज हामीलाई अनीतिका विरूद्ध लड्नुपर्छ भनेर उपदेश दिएको देखेर मलाई हाँसो लागेको हो । यसरी हाँसेकोमा मलाई क्षमा गर्नुहोस् पितामह !"



पितामह भिष्मले भने- "हे द्रौपदी ! तिमीले यसमा क्षमा माग्नु पर्दैन । तिमीले भनेको कुरामा सत्यता छ । त्यहि कुराले तिमीलाई हाँसो लाग्नु स्वाभाविक हो ।"

पितामहले केहीबेर चुप बसेर लामो सास तान्दै हो फेरि भने- "हे पुत्रि ! त्यसबेला मैले पापी दुर्योधनको अन्न खाएको थिएँ । उसले त्यो अन्न पाप र दुष्कर्म गरेर कमाएको थियो । त्यसरी पाप गरेर कमाएको अन्न खाएको हुनाले मेरो चित्तले न्याय-अन्याय, नीति-अनीति छुट्याउन नसक्ने भएको थिएँ ।"

एकपटक खोक्दै केहीबेर विश्राम गरेर भिष्मपितामहले फेरि भने- "त्यसबेलामा मेरो चित्त निर्मल थिएन । मैले दुशासनले गरेको कृत्य अन्याय र अनीति हो भनेर छुट्याउन सकिन । त्यसबेला मेरो बुद्धि ढाकिएको थियो ।

जसले जस्तो अन्न खान्छ उसको बुद्धि पनि उस्तै हुन्छ । आज मैले पाण्डवहरूको अन्न खाएको छु । पाण्डवहरू जस्ता धर्मात्माहरूको खन्न खाएकोले मेरो बुद्धि फेरि फर्किएको छ । आज अर्जुनले वाण हानेर मेरो शरीरबाट सबै विषाक्त रगतहरू निकालिएका छन् । दुर्योधनको अन्न खाएर मेरो रगत अशुद्ध र विषाक्त भएको थियो । त्यो सबै विषाक्त रगत अर्जुनको पवित्र र शुद्ध वाणले घोचेर सबै निकालिदियो । आज मेरो बुद्धि पवित्र भएको छ । अब म न्याय, अन्याय, धर्म, पाप, नीति, अनीति सबै छुट्याउन सक्ने भएको छु । त्यसैले तिमीहरूलाई उपदेश दिन सकेको छु ।"

भिष्म पितामहका यस्ता कुरा सूनेर पाँच पाण्डव र द्रौपदीका आँखाबाट आँसु आए ।



# अर्जुनलाई शिवको वरदान प्राप्त भयो

महाभारतको समयको कुरा हो । आजभन्दा पाँच हजार वर्ष अगाडिको घटना हो । पाण्डवहरूको वनवासको समय थियो । यस समयमा अर्जुनले एउटा पर्वतमा गएर शिवजीको तपस्या गर्न थाले ।

अर्जुनले शिवको तपस्या गरेर शक्ति बढाउने भयो भन्ने डर दुर्योधनलाई भयो । दुर्योधनले एउटा राक्षसलाई पठाएर अर्जुनको तपस्या भंग गराउन खोज्यो । तर त्यस दुष्ट राक्षसलाई अर्जुनले मारिदिए । यो कथा यहि घटनासँग सम्बन्धित छ ।

अर्जुन पर्वतको शिखरमा बसेर तपस्यामा लीन थिए । अर्जुनको परीक्षा लिन भनी स्वर्गका राजा देवराज इन्द्र एउटा ब्राह्मणको रूप लिएर त्यस पर्वतमा आएर उनले अनेक प्रयत्न गर्दा पनि अर्जुनको तपस्या भंग गर्न सकेनन् । त्यसपछि अत्यन्तै खुशी भए । आफ्नै छोराले गरेको तपस्यामा पिता खुशी नहुने कुरै भएन । इन्द्रले आफ्नो यथार्थ रूप प्रकट गरे । उनले आफ्नो छोरालाई शिवजीलाई खुशी पार्न सकिने एउटा दिव्य मन्त्र दिए र त्यहाँबाट स्वर्गतिर फर्किए ।

इन्द्र फर्किएपछि अर्जुन फेरि पनि तपस्यामा नै लीन हुन थाले । केही महिनापछि आफ्ना पिता इन्द्रले दिएको दिव्य मन्त्रद्वारा शिवको जप गर्न थाले । एक खुट्टामा उभिएर त्यो कठोर जपमा ध्यान गर्न थाले ।

दुर्योधनले यो कुरा चाल पाएर अर्जुनको हत्या गर्न एउटा राक्षसलाई पठायो । त्यो राक्षस सुँगुरको रूप लिएर अर्जुनमाथि आक्रमण गर्न थाल्यो । अर्जुनले आफ्नो रक्षा गर्नुपर्ने भयो ।

आफ्नो रक्षाका निम्ति अर्जुनले ,आफ्नो धनुषमा वाण चढाएर त्यस सुँगुरमाथि प्रहार गरे । त्यसैबेला अर्को व्याधाले पनि त्यो

सुँगुरमाथि वाण प्रहार गरेको थियो । ती दुवै वाण जुध्न थाले । अन्तमा दुवै वाण एक्कै चोटी सुँगुरमाथि पऱ्यो र सुँगुर त्यहिं मऱ्यो ।

सुँगुर ढलेपछि आफ्नो शिकार लिनको लागि व्याधाको सेवक आयो र मरेको सुँगुर लैजान खोज्यो ।

यो देखेर अर्जुनले त्यस सेवकलाई रोक्दै भने- "पर्ख ! यो सुँगुर मेरो वाणबाट मरेको हो, त्यसैले यसमा मेरो अधिकार हुन्छ । तिमीले लैजाने हो भने मेरो अनुमति लिएर मात्र लैजान सक्छौ ।"

व्याधाको सेवकले भन्यो- "हे युवक ! यो सुँगुर त मेरो मालिकको वारले मरेको हो । त्यसैले मेले तिमीसँग अनुमति लिन आवश्यक छैन ।"

यसरी आफूलाई तिमीको सम्बोधन गरेको र आफूले मारेको सुँगुरलाई अरूले मारेको भनेको सूनेर अर्जुनलाई साह्रै रीस उठ्यो । उनले क्रोधित हुँदै भने- "यदि यो सुँगुर तिम्रो मालिकले मारेको हो भने तिम्रो मालिकलाई नै बोलाएर ल्याउ । उसले मसँग युद्ध गर्नेछ र मलाई जितेर मात्रै यो सुँगुर लैजान पाउनेछ ।"

सेवकले भन्यो- "हे युवक ! तिमी तपस्यामा लागेको मान्छे कताको युद्धमा लाग्ने झञ्झट गर्छौ? यो तिमीले मारेको होइन । तैपनि तिमीलाई आफैले मारेको लाग्दछ भने मेरो मालिकसँग लडाइँ गरे हुन्छ ।"

यतिञ्जेल व्याधा पनि त्यहाँ आइपुगी सकेको थियो । अर्जुन र व्याधाबीच युद्ध भयो । केही बेरको युद्धपछि नै अर्जुनलाई थाहा भयो कि यो व्याधा कुनै साधारण व्याधा होइन ।



अर्जुनले ध्यान दृष्टिले हेरेर यो व्याधाको रूपमा आएको को रहेछ भनेर जान्न खोजे, तर उनी असमर्थ भए ।

त्यसपछि उनले भगवान् शिवको नाम उच्चारण गर्दै उनै भगवान्लाई स्मरण गर्दै उनको पूजा गर्न थाले । उनले शिवको चरणमा चढाएको फूल गएर व्याधाको गोडामा खस्न पुग्यो ।

तब अर्जुनलाई थाहा भयो कि जुन व्याधासँग उनी युद्ध गरिरहेछन् उनी नै शिवका रूप रहेछन् । त्यसपछि अर्जुनले शिवको स्तुति गर्दै उहाँको चरणमा शरण परे ।

शिवले हाँस्दै आफ्नो रूप प्रकट गर्नुभयो । उहाँको सेवक पनि नन्दी रहेछन् । उनले पनि आफ्नो रूपको दर्शन दिए ।

शिवले भन्नुभयो– "म तिम्रो तपस्याबाट प्रभावित भएको थिएँ । त्यसैले तिम्रो परिक्षा गर्न आएको हुँ । अब तिम्रो परिक्षा पनि पूरा भयो ।"

यति भनेर शिवले अजुर्ननलाई पाशुपत अस्त्र दिनुभयो र त्यहाँबाट अन्तर्ध्यान हुनुभयो ।



# गोकुलवासीको बसाइँ-सराइ

यो घटना श्रीकृष्णको जीवनको घटना हो । त्यसबेला अत्याचारी कंसको अत्याचारको विगविगी थियो । कंसले गोकुलमा आफ्नो काल जन्मिएको कुरा आकाशवाणीबाट सूनेको थियो । त्यसो हुनाले उसले गोकुलका सबै बच्चाहरूलाई मार्न आदेश दिएर आफ्ना मान्छेहरू पठाएको थियो ।

श्रीकृष्ण बालक नै हुनुहुन्थ्यो । उहाँ गोकुलमा चौतारी र पाटीहरूमा आफ्ना साथीहरूको टिम बनाएर खेल्ने, रमाइलो गर्ने, ठट्टा गर्ने र अनेक उभद्रो र उटुङ्याहा कार्यहरू गर्ने गर्नुहुन्थ्यो । गोकुलमा कंसका मान्छेहरू आउँथे र बालकलाई लगेर हत्या गर्ने गर्दथे, तर कसो कसो कृष्ण, बलराम र उहाँका साथीहरू आजसम्म बचेका थिए ।

वास्तवमा कृष्णलाई कंसले मार्न पनि सक्ने थिएन । उहाँ त भगवान्को अवतार हुनुहुन्थ्यो । उहाँ बालक भए पनि भगवान्को अंश हुनुहुन्थ्यो । उहाँले अनेक उपाय लगाएर आफू र आफ्ना साथीहरूलाई बचाउन सक्नुभएको थियो ।

कृष्ण, बलराम र अरू साथीहरू जोगिए पनि कंसले गोपी गोपिनीहरूका कैयौं बालबालिकाहरूलाई मारेको थियो । गोकुलवासीहरूलाई दिनुसम्मको दुःख दिएको थियो । यसबाट गोकुलवासीहरू अत्यन्तै आत्तिएका थिए ।

गोकुलवासीहरूमा एकजना उन्नद नाम गरेका व्यक्ति सबैभन्दा बूढा र जान्ने बुझ्ने अनुभवी व्यक्ति थिए । उनले कंसको अत्याचारबाट बच्नु छ भने अब गोकुल छाडेर अन्यत्रै जानुपर्छ भन्ने विचार गर्न थाले । यहि विचार गरेर उनले एकदिन सबै गोकुलवासीहरूलाई एकै ठाउँमा भेला हुन आह्वान गरे । सबै गोकुलवासी जनसमुदायहरू एकै ठाउँमा भेला भए ।



त्यस भेलामा ती उन्नद बूढाले सबैलाई सम्झाउँदै भने- "हे गोकुलवासीहरू । यदि अब हामीले सुरक्षित हुने र आफ्ना बाल बच्चाहरूलाई बचाउने हो भने यो ठाउँ छोड्नुपर्छ । नत्र यो दुष्ट राजा कंसले हाम्रा बच्चाहरू मारेर सिध्याउनेछ । हामीलाई पनि अनेक दुःख दिएर सताएर मार्नेछ ।"

उन्नदका कुरामा सबैले सहमतीजनाए । तर गोकुल छोडेर कहाँ जाने भन्ने बारे सबै अन्योलमा थिए ।

एकजनाले उठेर भने- "यो ठाउँ छोड्न त छोड्ने हो, तर यो ठाउँ छोडेर कहाँ जाने? अरू ठाउँमा गएर झन् यहाँ भन्दा बढी दुःख पाइने पो हो कि?"

उन्नदले भने- "यो ठाउँ छोडेर हामी सबै वृन्दावन जाऔँ । वृन्दावनमा हाम्रा गाईगोरू चराउने राम्रो ठाउँ पनि छ । घाँस पनि छ । घाँस उम्रने फराकिलो चौर पनि छ । त्यहाँको माटो पनि मलिलो छ ।"

उन्नदका कुरा सबैलाई चित्त बुझ्यो । सबैले अब गोकुल छाडेर वृन्दावन बसाइँ सर्ने तयारी गर्न थाले । सबैले आ-आफ्ना

मालसामान प्याक गर्न थाले । गोरूगाडा तयार गरियो । सामानहरू गोरूगाडामा प्याक गरेर राखियो ।

पशुहरूको ठूलो वथानलाई अघि लगाएर गोकुलका किशोरहरूले धपाउन थाले । बूढापाका र स्त्रीहरू सामानहरू बोकेर गाडामा चढ्न थाले ।

एउटा ठूलो लावालस्कर वृन्दावनतिर लाग्यो । आफ्नो जन्मभूमि छाडेर हिँड्दा वृद्धवृद्धा र महिलाहरूका आँखामा आँसु देखिन थाल्यो ।

यशोदाले आफ्ना दुई पुत्रहरू श्रीकृष्ण र बलरामलाई गाडामा राख्नुभयो । रोहीणी पनि त्यहिं हुनुहुन्थ्यो ।

हिँड्ने बेलामा यशोदाका आँसु टपकिरहेको थियो । यशोदाका आँखामा मात्र किन रोहिणी र अरू महिलाहरूका आँखा पनि रसाएका थिए ।

बसाइँ-सराइको मामिला नै यस्तो हो कि सबैलाई आफू बसिरहेको ठाउँ छोड्नुपर्दा दु:ख लाग्छ । आफू बस्दै आएको माटोको माया सबैलाई लाग्छ ।

एउटा डेरा सरेर अर्को डेरामा सर्नुपर्दा त मानिसहरू रून्छन् भने एउटा देश र जन्मेको ठाउँ नै छाड्दा कसलाई दु:ख लाग्दैन र?

यशोदाका आँखामा आँसु देखेर कृष्णले जिस्काउँदै सोध्नुभयो- "माता ! हजुरका आँखामा आँसु?"

माता यशोदाले भन्नुभयो- "तिमीलाई कसरी बताउँ बाबु ! यो जन्मभूमि छाड्नु पर्दा कति दु:ख लागिरहेको छ ।"



# रक्तबीजको वध

रक्तबीज नाम गरेको एउटा राक्षस थियो । उसको नाम पहिले अर्कै थियो । त्यो नामपछि मानिसहरूले बिर्सन थाले । उसले ब्रह्माको तपस्या गरेर एउटा वरदान पाएको थियो । त्यो वरदानको कारणबाट उ शक्तिशाली बनेको थियो ।

उसलाई प्राप्त भएको वरदानअनुसार उसको रगतको एक थोपा जमिनमा पर्नासाथ उ जत्तिकै शक्तिशाली अर्को रक्तबीज जन्मन पुग्दथ्यो । त्यहि वरदानअनुसार उसको मृत्यु कुनै पनि पुरुषको हातबाट हुन सक्दैनथ्यो ।

उसको रगतको थोपा भुइमा पर्नासाथ अर्को उ जत्तिकै शक्तिशाली राक्षस उत्पन्न हुने वर पाएकोले उसलाई रक्तबीज भन्न थालियो । उसको असली नाम सबैले बिर्सिए ।

यस्तो वरदान पाएपछि उ शक्तिशाली बन्यो । उसले स्वर्ग, पृथ्वी, पाताल सबैतिर उत्पात मच्चाउन थाल्यो । उसले ऋषिहरूको तपस्या भंग गरिदिने, उनीहरूका आश्रम भत्काउने, जनताहरूलाई सताउने गर्न थाल्यो ।

उसले स्वर्गका देवताहरूलाई लखेट्न थाल्यो । चारैतिर आतंक फैलाउन थाल्यो । उसको आतंक र अत्याचारले देवता, पशुपक्षी, ऋषिगणं, पृथ्वी, स्वर्ग सबै डराएका थिए ।

एकदिन सबै देवताहरू र ऋषिहरू गुहार माग्न ब्रह्मा, विष्णु र महेश्वर कहाँ पुगे । त्यस रक्तबीजलाई मार्न त्रिदेव पनि असमर्थ थिए ।

उसलाई कुनै पनि पुरुषले मार्न सक्तैनथ्यो । अर्कोतिर उसको जति थोपा रगत जमिनमा पर्छ उति नै उ जस्तै शक्तिशाली अर्को दैत्य पैदा हुन्छ । त्यसैले उसलाई मार्न कठिन थियो ।

त्रिदेवले देवताहरूको सहयोग लिएर माता भगवतीको उत्पत्ति गराए । देवी भगवती उत्पत्ति भएपछि उहाँलाई सबै देवता र त्रिदेवले आराधना गर्दै आफ्नो दुःख हरण गरिदिन अनुरोध गर्न थाले ।

देवीले देवताहरू, ऋषिहरू र त्रिदेवलाई चिन्ता नगर्न भनेर सम्झाउनु भयो । अब आफूले रक्तबीजलाई मारेर देवता ऋषि लगायत सबैको कल्याण गर्ने वचन दिनुभयो ।

देवीले त्यस रक्तबीजलाई चुनौति दिनुभयो । रक्तबीज आफ्ना सेना लिएर देवीमाथि जाइलाग्यो । देवी पनि आफ्ना हातहतियारसहित सुसज्जित भएर बाघमाथि चढेर रक्तबीजमाथि आक्रमण सुरू गर्नुभयो ।

रक्तबीज र देवीबीच भयकंर युद्ध भयो । घमासान लडाइँमा रक्तबीजका सबै सेनाहरू देवीले मारिदिनुभयो, तर रक्तबीजलाई मार्न अझै सक्नुभएन । रक्तबीजलाई मार्न जब देवीले तरवारले घोच्नुभयो तब उसको रगतका थोपा जमिनमा परे र त्यस प्रत्येक थोपाबाट अर्को रक्तबीज जन्मन थाल्यो ।

यो देखेर देवी क्रोधित हुनुभयो । त्यस रक्तबीजको शरीरबाट निस्केको रगतलाई जमिनमा पर्न नदिन देवीले आफ्नो जीब्रो जमिनमा पसार्नुभयो र सबै जमिन आफ्नो जिब्रोले ढाकिदिनुभयो । त्यसपछि त्यस दुष्टको रगत जमिनमा पर्न पाएन । त्यसको शरीरबाट निस्केको रगत देवीको जिभ्रोमा पर्दथ्यो । उहाँ त्यो रगत पिउनुहुन्थ्यो ।

यसरी रक्तबीजको सबै रगत पिउनाले उहाँको स्वरूप भयंकर र डरलाग्दो रूपमा परिणत भयो । उहाँको शरीर कालो हुन थाल्यो । त्यसैले उहाँलाई काली महाकाली जस्ता नामले पनि पुकार्न थालियो ।



अन्तमा, देवीले त्यस पापी रक्तबीजलाई मारेर त्यसबाट सारा देवता, ऋषिहरू र मानवको रक्षा गर्नुभयो ।

रक्तबीजको संहार गर्ने तीनै देवीलाई आज दशैंमा काली, चण्डी, दुर्गा, देवी आदि नामले पूजा गर्ने चलन छ । विभिन्न पशुहरूको भोग दिने चलन पनि छ ।



# अन्नदान महादान

दानवीर कर्ण महाभारतको युद्धमा मारिएपछि स्वर्ग पुगे । उनले पृथ्वीमा हुँदा निकै दान गरेका थिए । त्यसैले उनलाई दानवीर कर्ण भनेर संबोधन गरिन्छ । त्यहि दानको प्रभावले उनी स्वर्ग पुगे । स्वर्ग पुगेकै दिन उनलाई भव्य स्वागत गरियो र वस्नका लागि एउटा सूनको महल प्रदान गरियो ।

उनको त्यस सूनको भव्य महलमा सबै कुराको सुविधा थियो । उनको सेवामा अप्सराहरू तयार थिए । उनलाई सबै कुरामा सन्तोष भयो । तर खाना खाने बेलामा एउटा अचम्म भयो ।

सूनका थाल र सूनकै कचौरामा खानेकुरा पस्किएर ल्याइएको थियो । खानेकुरा चाहिँ पग्लेको सून थियो । यो देखेर कर्ण अचम्ममा परे । सूनका रोटीहरू सूनकै थालमा राखिएको थियो भने कचौरामा पग्लिएको सून थियो ।

सूनका रोटीहरू कसरी खाने? पग्लिएको सून कसरी खाने होला? यस्तो किन गरियो भनेर कर्ण छक्क परे । उनी स्वर्गका राजा इन्द्रकोमा गएर यो सबै किन र केका लागि भइरहेको छ भनेर सोधे ।

इन्द्रले भने- "तपाईंले पृथ्वीमा छँदा जे दान गर्नुभएको थियो त्यहि कुरा यहाँ मिल्ने हो । तपाईंले भूलोकमा छँदा जीवनभर सून मात्रै दान गर्नुभयो । माग्नेहरूलाई सून दिएर उनीहरूको घर भरिदिनुभयो । त्यसै कारणले गर्दा तपाईंलाई यहाँ पनि सून मात्रै दिइएको हो । तपाईंले पृथ्वीमा न त कुनै अन्न दान गर्नुभएको छ न त पानी नै । त्यसैले तपाईंलाई खानामा अन्न पानी नदिएर सूनको रोटी र पगालेर सूनकै दाल दिइएको हो ।"

इन्द्रले यस्तो भनेपछि कर्ण छक्क परे । उनी त अब झन् अप्ठेरोमा परे । स्वर्गको बसाइँ छ तर खानु छ सूनको रोटी । सूनको रोटी त खानै सकिदैन । अब कसरी बाँच्न सकिन्छ ?

"अब म के गरौं त?" कर्णले इन्द्रसँग सोधे ।

"तपाईं फेरि पृथ्वीमा जानुपर्छ र अन्नपानी दान दिएर आउनुपर्छ ।" इन्द्रले उपाय बताए ।

कर्णलाई सोह्र दिनको अरू आयु थपेर पृथ्वीमा पठाइयो । भाद्र पूर्णिमाको दिन सोह्र दिनको लागि कर्णलाई पृथ्वीलोकमा फेरि पठाइयो ।

पृथ्वीमा आएपछि कर्णले अन्नदान गर्न थाले । अन्न दानको महत्त्व पनि अरू पृथ्वीवासीलाई बताउन थाले । उनले पानी पिउनका लागि धारा, कुवा, इनारहरू पनि निर्माण गरे ।

सोह्र दिनमा उनले धेरै कुवा र धारो बनाउन त के भ्याउँथे र तैपनि दोबाटो र चौबाटोमा पानी भरिएका गाग्राहरू राखेर बटुवाहरूलाई पानी पिलाउन थाले ।

सोह्र दिनपछि उनी स्वर्ग फर्किए । पृथ्वीमा अन्नदान र पानी दान गरेकाले अब उनलाई स्वर्गमा पनि अन्न र पानी दिन थालियो ।

त्यसैबेला भाद्र पूर्णिमादेखि आश्विनको औंसीसम्म अन्नदान गर्ने चलन चल्न थालेको हो । यस अवधिलाई सोह्र श्राद्ध भनिन्छ । यस अवधिलाई पितृपक्ष पनि भन्ने गरिन्छ ।

अरू समयमा अन्नदान भन्दा यस सोह्र श्राद्धमा गरिएको अन्नदानको महत्त्व बढी छ । दानवीर कर्णको कारणले यस अवधि अन्नदानको विशेष महत्त्व रहन गएको छ ।



# कलियुग कहिले देखि शुरू भयो?

महाभारत युद्ध समाप्त भइसकेपछि भगवान् श्रीकृष्णको यस पृथ्वीमा आफ्नो काम पनि सकिएको थियो । उहाँ यस पृथ्वीमा जुन उद्देश्यका लागि आउनुभएको थियो, त्यो उद्देश्य पूरा भइसकेको थियो । अब यहाँ बसिरहनुको कुनै औचित्य थिएन । त्यसैले उहाँले यो पृथ्वी छाडिदिने सोच बनाउनुभयो ।

श्रीकृष्ण एउटा जंगलमा रूखमुनि ध्यान गरेर बसिरहनुभएको थियो । एउटा व्याधाले मृग ठानेर उहाँमाथि वाणले प्रहार गऱ्यो, त्यहि वाण नै कृष्णको यो पृथ्वी छाड्ने कारण बनिदियो ।





व्याधालेपछि थाहा पायो कि उसले मृग ठानेर हानेको वाणले मृगलाई नभएर भगवान् श्रीकृष्णलाई लागेछ । यो थाहा पाएपछि उसले श्रीकृष्णसँग क्षमा माग्यो । उहाँको शरणमा परेर माफी मागेपछि कृष्णले माफी दिंदै उसलाई सशरीर स्वर्गमा पठाइदिनुभयो ।

त्यहि वाणले लागेको घाउले श्रीकृष्णको मृत्यु भयो र उहाँ वैकुण्ठधाममा जानुभयो र आफ्नो यथार्थ स्वरूपमा लीन

हुनुभयो । उहाँको मृत्यु त एउटा बहना मात्र थियो । निहुँ मात्रै थियो । उहाँलाई पृथ्वीलोक छाड्नु थियो । वैकुण्ठ जानु थियो । पृथ्वी छाड्नु थियो । त्यसका लागि बहाना चाहिएको थियो । बहाना मिल्यो ।

जुन दिन श्रीकृष्णले आफ्नो शरीर छाडेर बैकुण्ठ प्रस्थान गर्नुभयो, त्यसै दिनदेखि पृथ्वीमा कलियुग शुरू भएको थियो । त्यो दिनसम्म द्वापर युग थियो । त्यहि दिन द्वापर युग समाप्त भएर कलियुग शुरू भयो ।

कलियुग लागेकोले त्यसका लक्षणहरू पनि देखिन सुरू गर्‍यो । कलियुगलाई दोषहरूको युग भनिन्छ । यस युगमा चोरी, डकैती, लुटपाट, हत्याहिंसा, बलात्कार, झुट आदि पापकर्महरू हुने गर्छन् । यो कलियुगको विशेषता नै हो ।

यो कलियुगमा एकातिर यस्ता पापकर्महरू बढ्नेछन् भने अर्कोतिर यस युगमा केवल हरिको नाम लिनाले मात्रै पनि धर्म मिल्छ । यो चाहिं कलियुगको राम्रो विशेषता हो । यस युगमा धर्म कमाउन सजिलो छ । कति पनि अल्छी नगरीकन केवल भगवान्को भजन गर्नाले पनि मुक्ति मिल्छ ।



# लाउरे र ढल देवता

हिजो-आज उ दाउरो भए पनि कुनै बेला उ लाउरे थियो । उ लाउर गएको थियो । आफूले कमाएको पैसा घर पठाउँथ्यो । घरमा स्वास्नीले पैसाको सदुपयोग गरेकी होली भन्ने विश्वासले उसले कमाएको पैसा घरमै पठायो । घरमा स्वास्नीले घडेरी किनेको, घर बनाएको समाचारहरू उसका साथीहरूले ल्याउँदा उ मख्ख पर्दथ्यो ।

एकदिन धेरै वर्षपछि घरमा आउँदा उसकी श्रीमती त उसले पठाएको पैसा सम्पत्ति सबै लिएर अर्कै पुरूषसँग पोइला गइ सकेकि रहिछे । घर आउँदा आफ्नो घरमा अर्को मान्छे आएर बसेको छ । घर खेत सबै बेचिसकेकी रहीछे । यसरी स्वास्नीबाट धोका पाएपछि उ विरक्तियो, उ फेरि लाउर गएन । गाउँमा अर्कै केटी बिहे गरेर घरजम गर्न थाल्यो ।

पहिली श्रीमतीले त्यसरी धोका दिएपछि उसले महिलाहरूमाथि विश्वास गर्न सकेन् । उसले सबै आइमाईहरूलाई उस्तै स्वार्थी र धोकेवाज देख्न थाल्यो । उसले आफ्नी दोस्री श्रीमतीलाई पनि विश्वास गर्न सकेन । उसको यस्तो स्वभावले गर्दा दोस्रो घरबार पनि बिग्रन थाल्यो । दोस्री श्रीमती पनि उसलाई छाडेर माइत गएर बसिदिई ।

यसरी उ फेरि विरक्तिन थाल्यो । तैपनि उसले हिम्मत हारेन । तेस्रो बिहे गर्‍यो । तेस्रो श्रीमतीसँग पनि उसको घरवार जम्न सकेन ।

यसरी सबै श्रीमतीबाट धोका र ठक्कर पाएपछि उसले अब जिन्दगीमा बिहे नगर्ने निर्णय गर्‍यो । अब लेखपढ गरेर विद्वान् बनेर लेखक बन्ने विचार गर्‍यो ।

उ काठमाडौं आयो । विभिन्न पुस्तकालयहरू धाउँदै उसले खुब अध्ययन गर्न थाल्यो । उसले धेरै किताबहरू पढ्यो चीन्तन मनन गर्न थाल्यो । उसले जीवन र जगत सम्बन्धमा धेरै कुरा थाहा पायो ।

उसले अनेकौं किताबहरू स्वतन्त्र ढंगले पढ्यो र आफ्नो ज्ञानलाई बढायो । अब उ एउटा विद्वान् व्यक्ति बन्न पुग्यो । उसलाई दर्शन, मनोविज्ञान, साहित्य, राजनीति, धर्म आदि विषयमा व्यापक ज्ञान थियो ।

उसले किताब लेख्न थाल्यो । किताबहरू लेखिसकेपछि छपाउने पैसा उसँग थिएन । त्यसैले उसले ती किताबहरू लिएर प्रकाशकहरूकहाँ गयो र उनीहरूलाई आफूले लेखेका कुराहरू देखाउन थाल्यो ।

काठमाडौंका कुनै पनि प्रकाशकले उसका कुरा बुझ्न सकेनन् । उसले आकाशका कुरा गर्दथ्यो । उसको बुझाई उच्च कोटिको थियो । उसले धेरै अध्ययन गरेको थियो र धेरै कुरा बुझेको हुनाले उसका कुरा धेरै उच्च कोटिका हुने गर्दथे ।

प्रकाशकहरूसँग उसको ज्ञान र विचार बुझ्ने क्षमता थिएन । काठमाडौंका प्रायः जसो प्रकाशकहरू बकम्फुसे, मूर्ख र स्वाँठ थिए । तिनीहरूसँग ज्ञानको दायरा सीमित थियो । उनीहरूको चेतनाले उसको लेखाइलाई बुझ्न सकेनन् ।

ती प्रकाशकहरू पैसाको भाषा बाहेक अरू केही बुझ्न सक्तैनथे । उनीहरूलाई प्रकाशन पेशा कस्तो हो भन्ने पनि थाहा थिएन ।

काठमाडौंका प्रकाशकहरू एउटाले छापेको अर्कोले नक्कल गर्दथे । बजारमा जे बिक्री हुन्छ र जे बिक्री भइरहेको छ त्यसलाई मात्रै प्राथमिकताा दिने गर्दथे ।

प्रकाशन पेशा भनेको नयाँ नयाँ प्रयोग गर्ने र जनतालाई ज्ञान बाँड्ने, नयाँ ज्ञानको खोजी गर्ने पेशा हो भन्ने तिनीहरूलाई थाहा थिएन ।

काठमाडौंका कुनै प्रकाशकहरू विदेशी किताबहरूलाई कुनै सस्तो र अपरिपक्व अनुवादकलाई अनुवाद गर्न दिएर घटिया अनुवाद गरेर किताब छपाउँथे र बेच्ने गर्दथे ।

कोही कोही कुनै चर्चित व्यक्तिको आत्मकथा लेख्न लगाएर बेच्ने गर्दथे र धेरै किताब बिक्री गरेर पैसा मात्रै कमाउने ध्यानमा हुन्थे ।

हुन त कसैले पनि जोगी बन्न र घरबार बिगार्नका लागि प्रकाशन संस्था खोलेको हुँदैन । किताब बेचेर पैसा कमाउन नै प्रकाशन संस्था खोल्ने हो । बिक्री नहुने किताब छपाउन पनि हुँदैन ।

तर नयाँ नयाँ प्रयोगहरू गर्ने नयाँ प्रतिभाहरूको खोजी गर्ने, नयाँ शैलीको आविष्कार गर्नु र ज्ञानको विस्तार गर्नु पनि त प्रकाशकको धर्म र दायित्व हो ।

प्रकाशक आफैमा चेतनशील र बौद्धिक खालको हुनुपर्छ । तर काठमाडौंका प्रकाशकहरू धेरै अध्ययन नगरेका अल्ली मूर्ख जस्तो लाग्यो उसलाई ।

कसैले पनि उसको प्रतिभा र स्तरलाई बुझ्न सकेनन् । उसले गरेको नयाँ नयाँ प्रयोगहरूलाई उनीहरूले महत्त्व दिएनन् ।

फेरि स्वाँठ प्रकाशकहरू उसलाई पागल जस्तो सोच्थे । कोही मूर्ख प्रकाशकहरू उसको लवाइ र व्यक्तित्व भएन भन्ने गुनासो गर्दथे । कोही उसका रचनामा अनेक दोष लगाउँदै उसलाई लामो भाषण दिन्थे ।

आफूभन्दा निम्न कोटिको चेतना भएका बेकारका लम्फुहरूले उसको रचनामा अनेक ताइ न तुइको दोष देखाउँदै आलोचना गरेर सुझाव र सल्लाह दिएको उसलाई मन परेन ।

उसको व्यक्तित्त्व पनि त्यति राम्रो थिएन । कपडाहरू मिलाएर लगाउन जानेको थिएन । प्रकाशकहरूसँग कुटिल किसिमले तिनीहरूलाई प्रभाव पार्ने ढंगले कुरा गर्न जान्दैनथ्यो ।

उ खरो र स्वाभिमानी थियो । उ कुनै चाकडी गर्न जान्दैनथ्यो र साह्रै हलुंगो कुरा गर्दथ्यो ।

सायद उसका यिनै कमजोरीहरूले गर्दा नै उसले राम्रो लेख्न जानेको थियो । यदि उसले लवाई व्यक्तित्त्व र कुटीलतातिर समय र महत्त्व दिएको भए, त्यस्ता कुरामा ख्याल राख्ने भएको भए उसले त्यति ज्ञान आर्जन गर्न पनि सक्ने थिएन ।

वास्तवमा सच्चा लेखक र विद्वान्को व्यक्तित्त्व जहिले पनि लथालिंग हुन्छ । जब व्यक्तिको चेतनाको स्तर माथि उठ्छ तब उसले शरीरसम्बन्धी कुरामा ध्यान दिन छोड्छ । चेतनाको उचाई लिएर आकाशमा उडेको व्यक्तिका लागि सांसारिक भौतिक चिजहरू तुच्छ लाग्ने गर्छन् ।

महान् वैज्ञानिक आइन्सटाइन कपाल खज्मज्याएर नकोरी हिँड्नुहुन्थ्यो । देवकोटा जस्ता महान् लेखक साधारण पहिरनमै हुनुहुन्थ्यो । जसको चेतना निम्नकोटीको छ, त्यस्ता व्यक्तिहरू प्रायः चिटिक्क पर्ने, सुट टाई बाँध्ने जस्ता कुरालाई अत्यधिक महत्त्व दिन्छन् ।

मान्छे राम्रो हुनुपर्छ । व्यक्तित्त्व आकर्षक देखिनुपर्छ । सफा हुनुपर्छ र कपडा मिलाएर लगाउनुपर्छ । सुट टाइ लगाउनुपर्छ । यी कुरामा कुनै दोष छैन । तर जब यसैलाई मात्र महत्त्व दिएर

कुनै साधारण पहिरनवाला दाह्री कपाल नकाटेको व्यक्तिलाई निम्न कोटीको ठान्न थालिन्छ तब त्यो निकृष्टता र तुच्छता हो ।

उ आफ्नो चिन्तन मनन र अध्ययनमा यति व्यस्त हुन्थ्यो कि उसलाई कपाल कोर्ने ख्याल नै आउँदैथ्यो । उ प्रकाशक कहाँ जाँदा उसको जिग्रीङ्ग कपाल देखेर प्रकाशक सोच्ने गर्दथ्यो- मान्छे हेर्दा यस्तो छ, यस्ताले के लेख्ला?

यस्तै यस्तै घटना घटे । कुनै एक दुई प्रकाशकले उसका रचना छाप्न खोजे पनि टाइपिस्टले टाइप गर्दथ्यो त्यसले समेत भट्काइदिने गर्दथ्यो । यस्तो के लेखेको भनेर आलोचना गर्दथ्यो । यस्ता बुद्धू र मूर्ख टाइपिस्टहरू पनि हुन्थे ।

प्रायः टाइपिस्टहरू मन्द बुद्धिका हुने गर्दछन् । सैनिकहरूले लेफ्टराइट गरी गरी मूर्ख बने जस्तै टाइपिस्टहरू पनि टाइप गर्दा गर्दा एकोहोरो र मूर्ख बन्न पुगेका हुन्छन् ।

आखिरमा उ लेखन क्षेत्रमा पनि असफल भयो । उसलाई कसैले बुझ्न सकेनन् । आखिरमा उ एउटा ढाक्रे बनेर काठमाडौंका गल्लीहरूमा भौतारिन थाल्यो ।

उ अब जे काम पायो त्यहि गर्न थाल्यो । भारी बोक्न थाल्यो । लेवर गर्न थाल्यो । उसले जिन्दगीदेखि लत्तो छाडिदियो । उसलाई अब केही कुराको पनि रहर लाग्न छाड्यो ।

काठमाडौंमा भारतीय नाकाबन्दीको समयतिर मट्टितेल, पेट्रोल र ग्याँसको हाहाकार मच्चिन थाल्यो । खाना बनाउनका लागि ग्याँस नपाएर मानिसहरूले दाउरामा खाना पकाउन शुरू गरेका थिए ।

त्यहिबेलातिर एकदिन उ भौंतारिदै बाग्मती नदीको तिरमा पुग्यो । उसले एउटा सुकेको रूख बाग्मती किनारमा ठिंग उभिरहेको देख्यो ।

उसले सोच्यो, यस रूखलाई काट्न पाए दुई तीन भारी दाउरा आउनेछ । काठमाडौंमा ग्यौँसको अभाव छ । दाउरा बिक्री भइरहेको छ । भारी बोकेर कमाएको भन्दा त बढी यहि दाउरा काटेर बेच्न पाए कमाइन्छ ।

उसले बञ्चरो लिएर आयो । दाउरा काट्न थाल्यो । दाउरा काट्दा काट्दै अचानक उसको हातबाट बञ्चरो फुत्कियो र नदीमा खस्यो ।

उ आत्तिन थाल्यो । उसले त्यो बञ्चरो कुनै साहुसँग मागेर लिएर आएको थियो । साहुले– "हराउलास नि, हरायो भने दुई हजार तिर्नुपर्छ" भनेको थियो ।

"हे भगवान् ! यो बागमतीको हिलोमा कता गड्यो यो बञ्चरो ।" उसले दुःखी हुँदै मनमनै भन्यो ।

उसले हे भगवान् के भनेको थियो तल नदीमा एकजना देवता जस्ता देखिने व्यक्ति टुप्लुक्क देखा परे । उनले सोधे– "हे भाइ, तिमी को हौ? किन भगवान्लाई पुकारेको ।

उसले भन्यो– "म पहिलेको लाउरे, अहिले दाउरे भएको छु । हजुर को पर्नुभयो नि ! देख्दा त कुनै देवता जस्तो देखिनुहुन्छ ।"

देवताले भने– "हो म देवता नै हुँ । तिमीले ठिक भन्यौ, तिमीले हे भगवान् ! भनेर बोलायौ । त्यसैले म निस्केको ।"

दाउरेले भन्यो– "ओहो हजुरलाई नमस्कार । यसरी हजुर निस्कनुहोला भनेर मैले सोचेकै थिइन् । सायद हजुर जल देवता पर्नुभयो क्यारे ।"

देवताले भने- "म जलदेवता होइन मनुवा । म ढल देवता हुँ । पहिले पहिले बाग्मतीमा जल बग्दथ्यो र जल देवता बस्थे । अचेल ढल बग्छ त्यसैले म ढल देवता बसेको हुँ । भन तिमीलाई के आपत परेर हामीलाई बोलायौ ।"

दाउरेले भन्यो- "हे ढल देवता ! मैले त यतिकै हजुरको नाम लिएको थिएँ । आपत त परेको थियो । तर हजुर यसरी प्रकट हुनुहोला भन्ने सोचेर नाम लिएको थिइन ।"

उसले यति भनेर आफ्नो बञ्चरो नदीमा खसेको आफु गरीब भएको र साहुले बञ्चरो हराएमा तिर्नुपर्ने कुरा गरेको पनि बतायो ।

जल देवताले भने- "ठिक छ मनुवा ! तिमी आत्तिनुपर्दैन, तिम्रो बञ्चरो म ल्याइदिन्छु ।"

यति भनेर ढल देवता नदीभित्र पसे । केहीबेरपछि उनले एउटा पहेंलो रंगको बञ्चरो लिएर आए ।

उनले भने- "हे मनुवा तिम्रो बञ्चरो यहि हो ?"

दाउरेले त्यो बञ्चरो हेऱ्यो । उसको बञ्चरो त्यस्तो पहेंलो थिएन । उसको बञ्चरो त फलामको थियो र कालो थियो । यो त सूनको बञ्चरो जस्तो छ ।

दाउरेले सोच्यो-- "कतै ढलदेवताले मेरो परीक्षा पो लिएका हुन् कि ।"

उसले एउटा पूरानो कथा सम्भन थाल्यो । त्यस कथामा एउटा दाउरेले यसरी नै बञ्चरोले नदीको तिरमा दाउरा काट्दा नदीमा बञ्चरो खसाल्यो । उ रून थाल्यो । जलदेवता निस्केर- "के भयो किन रोयौ?" भनेर सोधे ।

उसले आफ्नो बञ्चरो नदीमा खसेको र आफ्नो जीवन निर्वाह गर्न हतियार नै त्यहि थियो, त्यो खसेपछि आफ्नो जीवन कसरी चल्ला भनी चिन्ता लागेकोले रोएको बतायो ।

त्यसपछि जलदेवता नदीभित्र पसेर एउटा सूनको बञ्चरो ल्याएर– "यो हो तिम्रो बञ्चरो?" भनेर सोध्दा उसले इमान्दारीता देखाउँदै– "यो होइन मेरो त फलामको छ" भनेको हुन्छ ।

जलदेवता उसको इमान्दारीता र सोझोपन देखेर खुशी हुन्छन् र त्यो सुनको बञ्चरो र उसको फलामको गरी दुवै बञ्चरो उसलाई दिन्छन् ।

अर्को दाउरेको पनि त्यस्तै घटना घट्छ । उसलाई पनि जल देवताले सूनको बञ्चरो देखाएर– "यहि हो त तिम्रो बञ्चरो?" भनेर सोध्दा त्यो दुष्ट र लोभी दाउरेले– "हो हजुर यहि हो मेरो बञ्चरो" भन्छ । जलदेवता उसको यो फट्याई देखेर रिसाउँछन् नदीभित्र हराउँदछन् । त्यो लोभी दाउरेले फलामको बञ्चरो पनि गुमाउँछ ।

यो आजको बागमती किनारको दाउरेले त्यो कथा सूनेको थियो । उसले पनि आफू इमान्दार बनेमा यी ढल देवतालेपछि सूनको र फलामको दुवै बञ्चरो दिने हुन् कि भने आशा गऱ्यो ।

उसले इमान्दरीता देखाउँदै भन्यो– "हे ढल देवता ! यो बञ्चरो मेरो होइन । मेरो बञ्चरो त कालो छ, फलामको छ ।"

ढल देवताले भने– "हे मनुवा ! यो बञ्चरो पहिले पखालेर त हेर । यो फलामकै हो । यहाँको ढलको फोहोर लागेर पहेंले देखिएको हो ।"



# केही धार्मिक सूत्र कथाहरु

## (क) मय दानवको रचना



महाभारतको समयको कुरा हो । राजा युधिष्ठिरको राजसभा बनाउन मय दानवलाई बोलाइयो । उसले त्यो राजसभा यस्तो अचम्मको बनाएको थियो कि जब अर्का राजा दुर्योधन त्यो राजसभामा प्रवेश गरे तब उनले पानी ठानेर आफ्नो लुगा जोगाउँदै हिंड्न थाले तर त्यहाँ पानी थिएन । पानी भएको ठाउँमा सुख्खा जमिन भएको ठानेर अघि बढ्न खोज्दा पानीमा खसे अर्थात् पानी भएको ठाउँमा पानीको भ्रम भयो । भय दानवको यो रचना कौशल थियो । यो घटनाले देखाउन खोजेको कुरा यहि हो कि यो संसार पनि भ्रमपूर्ण छ । सुख खोजेको ठाउँमा दु:ख पाइन्छ । दु:खपछि सुख आउँछ । अज्ञानी मानिसले दु:खलाई सुख ठान्छ र वास्तविक सुखबाट वञ्चित हुनपुग्छ । यो सारा संसार भय दानवको रचना जस्तै भ्रमपूर्ण छ ।



## (ख) वेदव्यासको उपदेश

मानिसहरू अरूको हत्या गर्छन्, अरू मानिसहरूलाई दु:ख दिन्छन् । षड्यन्त्र रच्छन् । षड्यन्त्रको जालोमा अरूलाई फसाउँछन् । पद, धन र शक्तिको मोहमा जकडिएको मानिसले जस्तो सुकै पाप कर्म गर्न पनिपछि पर्दैन ।



शास्त्रहरूमा उल्लेख छ- 'अरूलाई उपकार गर्नु धर्म हो । अरूलाई दु:ख दिनु पाप हो ।'

वेदव्यासको अठार पूराण लेखे । अन्तिममा ती अठार पूराणको सार कुराको रूपमा यहि वाक्य लेखे- 'पापाय परपिडनम !' (अरुलाई दु:ख दिनु पाप हो ।)



## (ग) इन्द्र र समुन्द्र मन्थन

दुर्वासा ऋषि भगवान् शिवको दर्शन गरेर फर्किरहेका थिए । बाटोमा स्वर्गका राजा इन्द्रसँग अकस्मात भेट भयो । इन्द्र आफ्नो वाहन ऐरावत हात्तीमा चढेर कतै गइरहेका थिए ।

दुर्वासाको हातमा भगवान् शिवले दिनुभएको एउटा कल्याणकारक माला थियो । त्यो माला उनले देवराज इन्द्रको कल्याण होस् भन्ने हेतुले इन्द्रलाई दिए । अहंकारी इन्द्रले आफ्नो वाहन हात्तीलाई त्यो माला लगाईदिए । आफूले नलगाएर हात्तीलाई लगाएको देखेर दुर्वासा ऋषिलाई असाध्यै रिस उठ्यो । इन्द्रप्रति अत्यन्तै क्रोधित भएर उनले श्राप दिए— "इन्द्र तिम्रो धन सबै समुन्द्रमा डुबोस् ।"

दुर्वासाको श्रापले स्वर्गको सबै सम्पत्ति समुन्द्रमा डुब्यो । त्यो सम्पत्ति निकाल्न समुन्द्र मन्थन गर्नुपऱ्यो ।

इन्द्रको प्रसँगमा अनेकौं कथाहरू छन् । यिनको आसन जहिले पनि अस्थिर देखिन्छ । यिनले जहिले पनि अप्सराहरू पढाएर ऋषिहरूको तपस्या भंग गराउँछन् ।

इन्द्रलाई- "वृत्रहा" पनि भनिन्छ किनभने उनले वृत्रको वध गरेका थिए । वृत्रवध उनको जीवनको ठूलो परक्रमी कार्य हो । वृत्र को हो? भन्ने बारेमा चाहिं कुनै कुनै शास्त्रमा वृत्रको अर्थ मेघ हो भनिएको छ । मेघले वर्षा रोक्छ । इन्द्रले मेघलाई वध गरी वर्षा गराएका हुन् । त्यसैले इन्द्रलाई वर्षाका देवता मानिन्छ ।

लामो खडेरी परेमा इन्द्रको पूजा गर्ने चलन आज पनि छ ।



## (घ) अष्टावक्र र राजा जनक



अष्टावक्रको पिताको नाम कोहड थियो । उनको शरीर आठ ठाउँमा बांगिएकोले उनको नाम अष्टावक्र रहन गएको थियो । उनी गर्भमा रहँदा नै पूर्वजन्मको संस्कारको कारणले उनी ज्ञानी भएका थिए । उनका बाबुले वेद पढ्दा गलत पढेको गर्भमा बसेका बालकले सूने र बाबुलाई सच्चाएर पढ्न अनुरोध गर्दा उनका पिताको अहंकारमा चोट लाग्यो । गर्भमा बसेको बालकले आफूलाई सिकाउन लागेको देखेर उनलाई क्रोध भयो । उनले आफ्नै पुत्रलाई श्राप दिए- तेरो शरीर आठ ठाउँमा बांगियोस् ।

यसरी जन्मनासाथ आठ ठाउँमा बांगिएको शरीर लिएर जन्मेका बालकको विवाहपछि महर्षि बदन्याकी सुन्दरी छोरीसँग भएको थियो । विवाहपछि ईश्वरकृपाले गर्दा उनको शरीर सोझिएको थियो ।

आर्थिक संकटद्वारा पीडित यिनका पिता कोहड यिनी गर्भमा हुँदा नै घर छोडेर मिथिला देश गएका थिए । त्यहाँबाट उनी फर्कनन् । छोरा जन्मेर हुर्कंदासम्म पनि पिता नफर्केकोले अष्टावक्र आफ्ना पिताको खोजी गर्दै मिथिला पुगे । अष्टावक्र श्वेतकेतुका साथमा मिथिला गएको प्रसँग पाइन्छ । श्वेतकेतु अष्टावक्रका मामा पर्छन् ।

राजा जनकको दरवारमा उनले विद्वान्हरूसँग शास्त्रार्थ गरेर सबै विद्वान्हरूलाई हराएका थिए ।

राजा जनकको दरवारमा शास्त्रार्थ गर्न गएका कोहडले त्यहाँका विद्वान्हरू मध्य आचार्य वन्दी नामका विद्वान्सँग हारेका थिए र शर्तअनुसार उनी जेलमा कैद भएका थिए । पछि अष्टावक्रले ती आचार्य बन्दीलाई शास्त्रार्थमा हराएर आफ्ना पितालाई कैदबाट मुक्त गराएका थिए ।

राजा जनकको दरबारमा प्रवेश गर्ने बेलामा अष्टावक्रको आठ ठाउँमा बांगिएको कुरूप शरीर देखेर दरवारका विद्वान्हरू गलल्ल हाँसेका थिए । यसरी हाँसेर आफूलाई अपमान गर्ने विद्वान्हरूलाई देखेर अष्टावक्रले भनेका थिए– "म त विद्वान् ब्राह्मणहरूको सभामा आए भन्ठानेको थिएँ, तर म त यी सार्कीहरूको बीचमा पो आएको रहेछु ।"

ती विद्वान्हरूलाई अष्टावक्रको कुराले झटका लाग्यो । एउटा बाह्र वर्षे बालक जसको शरीर आठ ठाउँमा बाँगिएर कुरूप बनेको छ, उसले आफूहरूलाई सार्की भनेकोमा अपमानीत अनुभव गर्न थाले र राजा जनकलाई उजुरी गरे ।

जनकले बालकलाई बोलाएर सोधे– "तपाईंले ती ब्राह्मणहरूलाई किन सार्की भन्नुभयो?"

अष्टावक्रले जवाफ दिए- जसको दृष्टि बाहिरी रूप र छालामा छ त्यो हो- सार्की । त्यो शूद्र नै हो । चाहे त्यसको जन्म कुनै बाहुन कुलमा भएको भए पनि उ शूद्र नै हो । यी विद्वान्हरूको दृष्टि शरीरमा रहेछ । यिनीहरू मेरो बांगो शरीर देखेर हाँसेका थिए । ज्ञानीहरूको दृष्टि त आत्मामा पो हुनुपर्छ । आत्माको दृष्टिले पो हुनुपर्ने हो । अनि आत्मा कहिल्यै बांगो हुँदैन । आत्मा सधैं सोझो हुन्छ । बांगो त शरीर हुन्छ । बांगो हुन्छ, तर पानी बांगो हुँदैन । मेरो शरीर बांगो होला तर आत्मा त बांगो छैन ।"

बाह्र वर्षे बालकको यस्तो जवाफ सूनेर राजा जनक दंग परे । उनले यी बालक ज्ञानवान छन् भन्ने कुरा थाहा पाइहाले र अष्टाचक्रलाई गुरू बनाएर ज्ञान लिन थाले ।

जनक र अष्टावक्र बीचको संवादलाई अष्टावक्र गीता भनिन्छ । अष्टावक्रले जनकलाई दिएको उपदेश सँग्रह नै अष्टावक्र गीता हो । ज्ञान पिपासुको लागि यो ग्रन्थ अत्यन्तै उपयोगी छ ।



# केही धार्मिक शब्दावली र तिनका अर्थहरू

**चार**

**चार धाम** : जगन्नाथ, द्वारका, बद्रीनाथ, रामेश्वर

**चार युग** : सत्य, त्रेता, द्वापर, कलि

**चार दिशा** : पूर्व, पश्चिम, उत्तर, दक्षिण

**चौरासी लाख योनि**

**मनुष्य** : चार लाख

**जलमा बस्ने प्राणी** : नौ लाख

**पंक्षी** : दश लाख

**किरा** : एघार लाख

**वृक्ष** : सत्ताइस लाख

**पशु** : तेइस लाख

जम्मा चौरासी लाख योनि जीवले भोग गर्छन्।

**चार देवता** : माता, पिता, गुरु, अतिथी

**चार वेद** : ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद

**चार उपवेद** : आयुर्वेद, धनुर्वेद, गान्धर्ववेद, ज्योतिषशास्त्र वेद

**चार वर्ण** : ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र

**चार साधन** : साम, दाम, दण्ड, भेद

**चार आश्रम** : ब्रह्मचर्य, गृहस्थ, बानप्रस्थ, सन्यास

**चार पुरुषार्थ** : अर्थ, काम, धर्म, मोक्ष

**पञ्च इन्द्रिय** : मुख, गुदद्वार, लिंग, हात, पाउ

**पञ्च ज्ञानेन्द्रिय**: आँखा, कान, नाक, छाला, जिब्रो

**पञ्चकन्या** : द्रौपदी, कुन्ति, मन्दोदरी, अहिल्या, तारा

**पञ्चयास** : वेल, पँलास, वर, पिपल, डुम्री

पञ्चामृत : गाईको दूध, घ्यू, दही, मह, सख्खर

पञ्चगव्य : गाईको दूध, दही, घ्यू, गहुँत, गोबर

पञ्चरत्न : सून, चाँदी, मोती, मुँगा, पुँतालो

पञ्चतत्व : पृथ्वी, जल, वायु, आकाश, तेज

पञ्चदेवता : गणेश, सूर्य, विष्णु, शिव, देवी

पञ्चयज्ञ : वेदपाठ, बलि, अतिथी सेवा, वैश्यदेव, तर्पण

पञ्चपल्लव : वरको पात, पिपलको पात, आँपको पात, पाखुशीको पात, डुम्रीको पात

पञ्चअचार : चन्दन, फूल, धुप, बत्ती, नैवेद्य

पञ्चपाण्डव : युधिरिष्ठर, भिमसेन, अर्जुन, नकुल, सहदेव

**षड**

षटरिपु : काम, क्रोध, लोभ, मोह, मद, मात्सर्य

षट्‌ऋतु : वसन्त, ग्रीष्म, वर्षा, शरद, शिशिर, हेमन्त

षडरस : गुलियो, नुनिलो, अमिलो, पिरो, तितो, टर्रो

षडदर्शन : सांख्य, योग, वेदान्त, न्याय, वैशेषिक, मिंमासा

षड वेदांग : शिक्षा, कल्प, व्याकरण, छन्द, निरुत्त, ज्योतिष

**सप्त**

सप्तऋषि : अत्रि, भारद्वाज, विश्वामित्र, जमदग्नि, वशिष्ठ, कश्यप

सप्तनदी : गंगा, यमुना, सरस्वती, गोदावरी, नर्मदा, सिन्धु, कावेरी

सप्तसागर : दूध, दही, घ्यू, नुन, उखुको रस, मदिराको जलको

सप्तपुर : अयोध्या, मथुरा, माया, काशी, काञ्जी, अवान्तिका, द्वारवती

सप्तधान्य : धान, गहुँ, जौ, तिल, मास, मुगी, कागुनु

सप्तधातु : सून, चाँदी, तामा, पितल, फलाम, राङा, सिसा

**अष्ट**

**अष्टनाग** : अनन्त, वासुकी, पद्म, महापद्म, तक्षक, कर्कट, शंख, कुलीर

**अष्टदिशा** : पूर्व, आग्नेय, पश्चिम, वांयव्य, उत्तर, इसान, दक्षिण, नैऋत्य

**अष्टमहादान** : फलाम, तिल, सून, कपास, नुन, सप्तधान्य, गाई, भूमि

**अष्टङ्ग प्रणाम** : शिर, छाती, हात, पाउ, घुँडा, मन, वचन, दृष्टि

**अष्ट सुगन्ध** : श्रीखण्ड, अगरु, कपुर, कस्तुरी, गोरोचन, कुंकुम, हात्तीको मद, लाक्षरस

**अष्टपर्वत** : सुमेरु, कैलाश, हिमालय, त्रिकुट, चित्रकुट, चन्द्रवर्त, गन्धमादन

**अष्टचिरञ्जिवी** : मार्कण्डेय, व्यास, परशुराम, अश्वत्थामा, बलि, हनुमान, विभिषण, कृपाचार्य

**नव**

**नवदुर्गा** : शैलपुत्री, ब्रह्मचारिणी, चन्द्रघण्टा, कुष्माण्डा, स्कन्दमाता, कात्यायनी, कालरात्री, महागौरी, सिद्धिदात्री

**नवरत्न** : मोति, मुँगा, पन्ना, पुष्पराज, निलम, गोमेद, माणिक्य, वैदुर्य, सुवर्ण

**नवग्रह** : सूर्य, चन्द्र, मंगल, वुध, बृहस्पति, शुक्र, शनि, राहु, केतु

**नवग्रह सामिधा** : पलाश, आँक, खयर, अपामार्ग, पिपल, डुम्री, शमी, दुवो, कुश

**दश**

**दशदान** : गाई, भूमि, तिल, सून, घ्यू, वस्त्र, चाँदी, नुन, धान, गहुँ

**दश अवतारः**

**मत्स्य** – पानीमा अवतार लिए

**बराह** – पानी र जमिन दुवैमा बस्ने अवतार

**कुर्म** – पानी र जमिन दुवैमा ब्रस्ने अवतार

**नरसिंह** – मान्छे रजनावर दुवैको संयुक्त स्वरूप

**वामन** – मान्छेमात्र

**राम** – मर्यादा कायम गर्ने

**परशुराम** – राज्य रक्षा गर्ने

**कृष्ण** – दुष्ट नाश गर्ने

**बुद्ध** – शान्ति कायम गर्ने

**कल्की** – अन्तिम दशौं अवतार

**दश इन्द्रिय** : आँखा, कान, छाला, जिब्रो, नाक, मुख, गुदद्वार, लिंग, हात, गोडा

**दशमाता** : तारा, दुर्गा, चामुण्डा, बंगलामुखी, भुवनेश्वरी, काली, भैरवी, छिन्नमस्ता, धुमावति, मातङ्गी

**दशोपचार** : जल, अर्घ्य, स्नान, वस्त्र, फूल, दिप, धूप, नैवेद्य, आचमन, चन्दुनाक्षता

**त्रि**

**त्रिमधु** : घ्यु, मह, चिनी

| | | |
|---|---|---|
| **त्रिकाल** | : | भूत, वर्तमान, भविष्य |
| **त्रिलोक** | : | स्वर्ग, मर्त्य, पाताल |
| **त्रिदेव** | : | ब्रह्मा, विष्णु, महेश्वर |
| **त्रिगुण** | : | सत्व, रज, तम |
| **तीन अवस्था** | : | जाग्रत, स्वप्न र जाग्रत |

**अन्य**

| | | |
|---|---|---|
| **बाह्र राशि** | : | मेष, वृष, मिथुन, कर्कट, सिंह, कन्या, वृश्चिक, तुला, धनु, मकर, कुम्भ, मीन |
| **एकादश रुद्र** | : | वीरभद्र, शम्भु, गिरिश, पिनाकी, कपाली, विशापति, ईश्वर, अपराजित, विशापति, स्थाणु, अहिर्वुहन्य |
| **चौध भुवन** | : | अतल, वितल, सुतल, तलातल, महातल, रसातल, पाताल, भुलोक, भुवर्लोक, स्वर्गलोक, महलोक, जनलोक, तपलोक, सत्यलोक |
| **अठार पूराण** | : | ब्रह्म पूराण, पद्म, विष्णु, शिव, नारद, मार्कण्डेय, अग्नि, भविश्य, लिंग, बराह, स्कन्द, बाम, कुर्म, मत्स्य, गरुडपूराण, ब्रह्मपूराण, ब्रह्मवैवर्त पूराण, श्रीमद्भागवत पूराण |
| **उपपूराण** | : | सनतकुमार, नारसंह, वायु, दुर्वासा, कपिल, मानव, वरुण, कालिका, साम्व, नन्दी, सूर्य, महेश्वर, पराशर, आदित्य, वरिष्ठ, देवीभागवत, यति उपपूराण, पशाननुपूराण |



एस.पी. प्रकाशनबाट प्रकाशित

## विश्वका प्रसिद्ध व्यक्तिहरूका जीवनी अवश्य पढ्नुहोस्






















**एस. पी. प्रकाशन प्रा.लि.**
बागबजार, काठमाडौं, नेपाल
फोनः ०१-४२४५१९७

मूल्य रु.१५०/-